• वर्ष ११ • अङ्क ४ • मङ्सिर २०६६ • पूर्णाङ्क १२४

## सम्पर्क कार्यालयहरु


- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बैंसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौं**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौं**, सिमलटार


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## अन्नपूर्ण माता विशेष

मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमवार र मङ्गलवार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलवार र बिहीवार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिवार र बुधवार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतवार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिवार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**आवरण चित्र**
उदयचरण श्रेष्ठ

**मुद्रण**
भेराइटी प्रिन्टर्स प्रा.लि.
कुलेश्वर, काठमाडौं ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौं, नेपाल**
फोन नं: २०७१२००,२१००१५३, पत्रिका वितरण फोन नं: ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

आध्यात्मिक क्षेत्रमा अगाडि बढ्न सद्‌गुरुको अनिवार्य आवश्यकता एवं अपरिहार्यतालाई मध्यनजर राख्दै सिद्धाश्रम शक्ति केन्द्रले सद्‌गुरुको आवश्यकतालाई पूर्ति गर्ने उद्देश्य, लक्ष्यका साथ अगाडि बढेको छ। गुरुबिना ज्ञान सम्भव छैन भन्ने शास्त्रगत मान्यताअनुरुप सद्‌गुरु नपाएर भट्किरहेका तमाम व्यक्तिहरुका लागि यो केन्द्र गुरु प्राप्तिको माध्यम बनेको छ। सामान्य व्यक्तिहरु केही शक्ति र एक दुईवटा सिद्धिको भरमा गुरु बनी बसेका व्यक्तिहरुको पछाडि लागिरहेका छन्। त्यस्ता व्यक्तिहरुले हजारौँ व्यक्तिहरुलाई गुमराहमा राखी सद्‌गुरुको महिमा घटाएका छन्। समाजमा नक्कली गुरुहरुको बिगबिगी बढेको छ। २-४ सय, २-४ हजार व्यक्तिहरु पछि लगाएर गुरु पदवी ओगटेर सद्‌गुरुलाई धोका दिइरहेका छन्, आफैले आफ्नो आत्मालाई ढाँटिरहेका छन्। समाजमा सद्‌गुरुको नाममा विकृतिहरु बढेका छन्, सद्‌गुरुको महिमा गरिमालाई कलंकित गर्ने दुष्प्रयास भइरहेका छन्। त्यसैले सिद्धाश्रम शक्ति केन्द्रले समाजमा सद्‌गुरुको महानता, उच्चता, गरिमा, महिमालाई अक्षुण्ण राख्ने प्रयास गरिरहेको छ, सद्‌गुरुको वास्तविकतालाई उजागर गर्ने महान् कार्यमा अगाडि बढिरहेको छ। त्यसैले तपाईंले पनि सद्‌गुरुको अभाव महसुस गर्नुभएको छ, कतै सद्‌गुरुको नाममा नक्कली सद्‌गुरुको फन्दामा पर्नुभएको छ भने आजै यस केन्द्रसँग आबद्ध भई जीवनलाई ऊर्ध्वमुखी बनाउनुहोस्।

यसपालिको अंकलाई हामीले 'अन्नपूर्ण माता विशेष'को रुपमा निकालेका छौँ। अन्नपूर्ण माताको महिमा, गरिमा आफैमा अवर्णनीय छ। जीव, जगत्, सृष्टिलाई सुव्यवस्थित रुपबाट अगाडि बढाउनलाई माताको योगदान, महत्त्व आफैमा अतुलनीय छ। जीव अन्नबिना बाँच्न सक्तैनन्। अन्नकी देवीको रुपमा सर्वत्र पूजित अन्नपूर्ण माता बाहिरी शरीरलाई चाहिने अन्न मात्रै दिने देवी नभई आत्मालाई आवश्यक पर्ने अन्न पनि प्रदान गर्ने देवी हुनुहुन्छ। यसैले भौतिक एवं आध्यात्मिक अन्न एवं खुराक प्रदान गर्ने माता अन्नपूर्णलाई प्रत्येक व्यक्तिले उच्च श्रद्धा, भक्ति एवं समर्पण गर्नुपर्दछ तर पनि हामीले उहाँलाई जति गर्नुपर्ने हो त्यति गर्न नसकेको महसुस हुन थालेको छ। माता अन्नपूर्णको बारेमा जति व्यापकरुपमा महिमा गाइनुपर्थ्यो, उच्च सम्मान प्रदान गर्नुपर्थ्यो, त्यो भएको पाइँदैन।

नेपाल कृषिप्रधान देश भएकोले पनि कृषकहरु आफ्ना अन्नबालीहरु माता अन्नपूर्णलाई चढाएर उहाँप्रति पूजा आराधना गरी मात्रै प्रयोग गर्दछन्। उनीहरुले माताको बारेमा थाहा पाए पनि नयाँ पुस्ताले भने थाहा पाएका छैनन्। यस अंकमा माता अन्नपूर्णका विभिन्न स्वरुपहरुको बारेमा एवं माताको बारेमा केही जानकारीहरु समेट्ने कोशिश गरेका छौँ जसले यहाँलाई मातासम्बन्धी केही जानकारी प्राप्त गर्न सहयोग पुग्नेछ भन्ने आशा लिएका छौँ।

अन्तमा, यस अंकमा भए गरेका गल्ती, कमी कमजोरीको लागि परमपूज्य सद्‌गुरुदेवसमक्ष र यहाँहरुसँग पनि क्षमायाचना गर्दै आवश्यक सल्लाह सुझावको अपेक्षा राख्दछौँ। अस्तु।

# माता अन्नपूर्ण

श्वेतवर्ण, अष्टभुजा, त्रिनेत्र, पञ्चमुण्डसहित अतिशय सुन्दर शोभायमान स्वर्णमुकुट, कर्णकुण्डल, स्वर्णहार, मुण्डमाला, सर्पमाला धारण गरेकी उन्मुक्त स्तनधारी हँसमुखी क्षीर समुद्रमा कमलमाथि नागासनमा विराजित श्री अन्नपूर्ण देवीको स्मरण मात्रले पनि मन प्रफुल्लित हुन्छ। दायाँ हातले पात्र समाई बायाँ हात विन्दु मुद्रामा बस्नुभएकी देवीका अन्य दायाँ हातहरूमा तरवार, वज्र र वरद मुद्रा एवं बायाँ हातहरूमा ढाल, धानको बालाको मुट्ठा र कमलसहितको कलश छन् ।

उपत्यकामै प्रसिद्ध काठमाडौँको असनस्थित श्री अन्नपूर्ण देवीको मन्दिरमा पश्चिमाभिमुख मुख्य द्वारमाथि र दायाँबायाँ राखिएको तोरणमा माथि वर्णित स्वरूपमा माताको अति सुन्दर स्वर्णमूर्ति प्रतिस्थापित छन् । प्रत्येक वर्षको आश्विन शुक्ल एकादशी र द्वादशी दुई दिन असनस्थित श्री अन्नपूर्ण देवीको उल्लिखित स्वरूपको मूर्ति खटमा राखी नगर परिक्रमा गरी जात्रा सम्पन्न गरिन्छ । जात्रामा लगिने खटको पृष्ठ भागमा देवीको पौवा चित्र टाँगिएको हुन्छ । श्री अन्नपूर्ण देवीको मन्दिरको गर्भगृहमा शिला-कलशलाई चाँदीले मोडी कलशकै स्वरूप दिइएको छ । तान्त्रिक मतमा कलशको ठूलो भूमिका रहेको छ । श्री मच्छेन्द्रनाथलाई काठमाडौँ ल्याउन कामरूप कामाक्षामा आचार्य बन्धुदत्तले आह्वान गर्दा भ्रमरको रूपमा उपस्थित हुनुभएका मच्छेन्द्रनाथलाई तान्त्रिक शक्तिले कलशभित्र पारी माथि कमल पुष्पले छोपी काठमाडौँ ल्याइएको लोकोक्ति छ। कलशलाई गुह्येश्वरीको प्रतीकस्वरूप पूजन गरिन्छ । लिच्छवीकालमा विस्तारित काठमाडौँ नगरमा श्री अन्नपूर्ण देवीको प्रतीकस्वरूप स्थापित कलश (घैँटो, नेवारी भाषामा घः), स्थानीय श्रीघः बिहारमा सिघः, नघलटोलमा नघः, त्यङ्गल टोलमा त्यङघः, इन्द्रचोकमा वङघः र जैशीदेवलमा न्हुघः अद्यावधिक देख्न सकिन्छ ।

भविष्योत्तर पुराणमा माता अन्नपूर्ण देवीको स्वरूप पार्वतीको हो भन्ने वर्णन पाइन्छ–

*शिव शक्त्यात्मकं विद्धि जगदेतच्चराचरम्*
*यः शिवः स हि विश्वेशः शक्ति या सा च पार्वती*
*मायेति कीर्त्यते सृष्ट्यामन्नपूर्णेति पालने*
*संहृतौ कालरात्री त्रिधा स्रका प्रर्कित्ये ।*
*श्री विद्याऽमृत पीठेशी सुधा श्रीरमृतेश्वरी*
*अन्नपूर्णा विख्याता पंचैताः कामधेनवः*

अर्थात् यो सारा चराचर जगत् शिव शक्तिस्वरूप छ, जो शिव हुन् उनै विश्वेश्वर हुन् र पार्वती उनकै शक्ति हुन् । सृष्टिकालमा उनलाई 'माया' भनिन्छ, उनै पालनको समयमा 'अन्नपूर्णा' नामबाट विख्यात् भइन् । संहार कालमा उनै 'कालरात्रि' कहलाइन् । यसरी कार्यरूपमा (तीन प्रकार) त्रिधा वर्णित शक्ति वास्तवमा एकै हुन् । दश महाविद्यामा माता अन्नपूर्णको स्वरूपलाई नै त्रिपुरभैरवी मानियो । श्री विद्यामा अन्नपूर्णलाई अमृतस्वरूप भनिएको छ ।

जो मनुष्य सहज र थोरै परिश्रमबाट आफ्नो दुःख-

अन्नबिना मानवजीवन मात्र होइन सृष्टिको नै कल्पना गर्न सकिँदैन । सृष्टिको शाश्वत् नियमअन्तर्गत शरीर भएपछि जसरी भौतिक अन्नको आवश्यकता पर्दछ त्यसरी नै आत्माको उन्नति, प्रगतिको लागि आत्मिक अन्नको आवश्यकता पर्दछ। आत्मिक अन्नलाई गुरुहरूप्रति, आफ्ना इष्ट देवीदेवताप्रति गरिने अगाध श्रद्धा, भक्ति, जप, तप, ध्यान, योग, पूजा, पाठ आदिलाई लिने गरिन्छ । जबसम्म कुनै पनि व्यक्तिले बिहान उठेर स्नान आदि कर्म गरी आत्माको लागि पूजापाठ (आत्मिक अन्न) आदि गर्दैन, उसले शरीरको लागि पनि अन्न ग्रहण गर्ने अधिकार छैन भनी हाम्रा शास्त्रहरूले एकै स्वरले सन्देश दिइरहेका छन् । त्यसैले आज तपाईं हामी सम्पूर्णले मूल्यांकन गर्ने बेला आएको छ– हामीले हाम्रा शास्त्रगत मान्यता, परम्परागतरूपमा आएका चलनलाई कति हदसम्म पालना गरेका छौँ । त्यसैले तपाईं हामी प्रत्येकले आत्माको कल्याणको लागि आजैदेखि केही न केही गर्ने गरौँ ।

मंसिर महिना अन्नबाली भित्र्याउने महिना हो र अन्नपूर्णा मातालाई अन्नको रूपमा हामीले घरमा भित्र्याउँदैछौँ। यसैले अन्नलाई मात्रै होइन वास्तविकरूपमा अन्नपूर्णा मातालाई पनि आदर, सम्मान गर्न सिकौँ, उहाँको कृपा प्राप्त गरी भौतिक र आध्यात्मिक प्रगति गर्दै अगाडि बढौँ । अन्नपूर्णा माता केवल भौतिक अन्न, सम्पदाकी मात्र देवी हुनुहुन्न । उहाँ त आत्मिक उन्नति, प्रगतिको मूल आधार हुनुहुन्छ ।

काठमाडौँको असनस्थित माता अन्नपूर्णको मन्दिर

दारिद्र्यको अन्त गर्न चाहन्छ भने जगन्माता अन्नपूर्णको आराधनालाई सर्वोपरि मानी व्रत एवं स्तोत्र पाठ गर्दा दु:खदायी जीवन सुखमय बन्छ । माता अन्नपूर्णको व्रत उपासनाले धनधान्य समृद्धिको साथसाथै ज्ञान वैराग्यमा सिद्धि प्राप्त हुने उल्लेख छ ।

*'अन्नपूर्णे सदा पूर्णे शंकर प्राण बल्लभे,*
*ज्ञान वैराग्य सिद्धयर्थं भिक्षांदेहि च पार्वति'*

समस्त विश्वको भरण गर्ने माता अन्नपूर्णाले भगवान् शिवप्रदत्त उपकरणहरूबाट कृषि पद्धतिको आविष्कार गर्नुभएको वर्णन गरिएको सुन्दर पौराणिक कथा छ । जगत्पिता भगवान् शिवले समाधिमा लीन हुनुपूर्व जगज्जननी माता पार्वतीलाई जगत्का सम्पूर्ण प्राणीहरूको पालन-पोषण गर्ने उत्तरदायित्व दिँदै समाधिस्थ हुनुभयो । भगवती पार्वती कार्य पूर्ण गर्ने चिन्तनामा हराउनुभयो । समाधिको समाप्तिपछि त्रिनेत्र खोल्नुभएका भगवान् शिवले अचल अवस्थामा रहनुभएकी पार्वतीसँग किंकर्तव्यविमूढताको सम्बन्धमा प्रश्न गर्नुभयो । उत्तरमा पार्वती शिवसँग प्रार्थना गर्नुहुन्छ, 'हे जगत्पिता, जगत्को लागि अन्नको व्यवस्था गर्न मलाई हजूरको सहयोग आवश्यक छ । समाधिको समयमा हजूरलाई जुन वस्तुको आवश्यकता छैन ती वस्तुहरूको प्रयोग गर्ने आज्ञा दिनुहोस् ।' भगवान् शिवको प्रश्नवाचक दृष्टिको उत्तरमा श्री माता पार्वतीले बीउ उमार्न सजिलोको लागि धर्तीलाई खुकुलो बनाउन हलोको रूपमा त्रिशूलको प्रयोग, धर्ती जोत्न नन्दी र खेतीको लागि उन्नत मलस्वरूप उनको गोबरको प्रयोग, भगवान् शिवको जटाजुटमा बसेकी गंगाको जललाई सिँचाईमा प्रयोग र उब्जनी बढाउन श्रमिकको रूपमा शिवगणको मेहनत प्रयोग गर्न अनुमति आवश्यक भएको स्पष्ट पार्नुभयो । चराचुरुङ्गी र मुसाहरूबाट उब्जनीलाई बचाउन डमरुको ध्वनि र सर्प, शिवजीले घस्नुहुने खेतको आलीमा लगाएको आँक-धतुरोको वृक्षको खरानीले खेतीलाई कीराहरूबाट बचाई बाँकी भएको भस्म खप्परमा भरी जगतलाई दिने कुरा उल्लेख गर्नुभयो । माता पार्वतीको सुझबुझले विस्मित हुनुभएका सदाशिवले माग गरिएका सबै वस्तु उपयोग गर्न

पाउने सहमतिका साथै श्री अन्नपूर्णाको नाम पनि माता पार्वतीलाई दिनुभयो ।

भारतको जालन्धर शहरको कोट किशनचन्द क्षेत्रमा एउटा प्राचीन सरोवर छ । अंग्रेज इतिहासकार कनिंघमले यसलाई ब्रह्मसर नामाकरण गर्नुभएको थियो । ब्रह्मसरको केही चिह्न बाँकी रहेको यस स्थानमा वृन्दादेवी मन्दिर, ब्रह्मकुण्ड र श्री अन्नपूर्णाका मन्दिरहरू छन् । श्री अन्न्पूर्णाको यस मन्दिरमा मातालाई विग्रह पिण्डको रूपमा दर्शन गरिन्छ । धनञ्जय नामको एक दरिद्र ब्राह्मणले आफ्नो दरिद्रता नाश गर्न धेरै उपायहरू गरे तर केही लागेन । एकदिन काशीको ज्ञानवापीमा दरिद्रता नाशका लागि रुद्रसूक्तको जप गर्दै त्यहीं निदाएछन् । राति स्वप्नमा एक जटाधारी ब्राह्मणले दर्शन दिँदै पूर्वजन्ममा अन्नको अपमान गरेकोले अहिले दरिद्र भएको बताए । आफ्नो दरिद्रता नाशका लागि भगवती अन्नपूर्णाको व्रत बस्न अह्राए । निद्राबाट ब्यूँझेपछि धेरैसँग अन्नपूर्णा व्रत विधिसम्बन्धी सोधपूछ गर्दा कसैलाई पनि ज्ञात भएको पाइएन । बडो दुःखकष्ट भोग्दै पूर्व-पश्चिम घुम्दै गर्दा अन्तमा एउटा सुन्दर तलाउ देखे । त्यस तलाउका २१ स्वर्णमयी सिँढीहरू ओर्लंदा दिव्य प्रकाश देखे । त्यहाँ रत्न सिंहासनमा विराजमान भगवान् शंकरलाई भिक्षा दिइरहनुभएकी माता अन्नपूर्णाले दरिद्र ब्राह्मणलाई श्रद्धा र सावधानीपूर्वक व्रत बस्न अह्राउनुभयो । साथै आफू काशी प्रस्थान गर्न लागेकीले त्यहाँ विश्वेश्वरको मन्दिर र उक्त मन्दिरको दक्षिणतर्फ आफ्नो (माता अन्नपूर्णाको) मन्दिर निर्माण गर्ने आज्ञा दिनुभयो । यसरी उत्तर भारतमा जालन्धर र काशीमा माता अन्नपूर्णाको दुई मन्दिरहरू प्रसिद्ध छन् । जय गुरुदेव !

अन्नपूर्णालाई सामान्य अर्थमा हेर्दा अन्नसम्बन्धी देवीको रूपमा लिइन्छ । सम्पूर्ण जगत्कै पालन शक्तिस्वरूपा गौरीलाई केवल अन्नमा मात्रै तुलना गर्नु हाम्रो गलत एवं सङ्कुचित सोचाइ हो । साधारणरूपमा हेर्दा अन्नपूर्णा माताको पूजा, आराधना वा साधना केवल अन्नसँग सम्बन्धित भएजस्तो लागेता पनि यसको विशालता र व्यापकता अतुलनीय छ । माता पार्वतीको साक्षात् स्वरूप, सारा ब्रह्माण्डमा व्याप्त माता अन्नपूर्णा सारा जगत्कै पालनहारी हुनुहुन्छ । भगवान् शिवकी अर्धाङ्गिनी गौरीस्वरूपा माता अन्नपूर्णा प्राणी जगत्कै प्राणाधार हुनुहुन्छ । अन्नको तात्पर्य धनधान्य, पुत्रपौत्र, यश, कीर्ति आदि सम्पूर्ण पर्दछन् । प्रत्येक कार्यको पूर्णताभित्र माता अन्नपूर्णाको कृपा, अनुकम्पा लुकेको छ । कुबेर भगवान्लाई पनि पूर्ण कृपा गर्दै कुबेर बनाइदिनुभएकी जगत्जननी भगवती अन्नपूर्णा (गौरी) को जति चर्चा गरे पनि अपूर्ण नै हुन्छ । माता महालक्ष्मीको कृपा प्राप्त गर्न वा कुबेर भगवान्को कृपा प्राप्त गर्न अथवा अन्य कुनै साधना होस् यी सबैको पूर्णताको द्योतक हो- अन्नपूर्णा पूजा, आराधना र साधना । बिनाअन्न कुनै पनि प्राणी बाँच्न सक्दैन, त्यस्तै आध्यात्मिक शरीर बाँच्नको लागि चाहिने 'आध्यात्मिक अन्न'-ध्यान, साधना, तपस्या आदिको लागि पनि माताको कृपाको आवश्यकता पर्दछ । तसर्थ चाहे धनी व्यक्ति होस् वा गरीब, साधारण जिज्ञासु होस् वा भक्त वा उच्चस्तरको साधक, योगी, संन्यासी नै किन नहोस्, सबैलाई उहाँको कृपाको अपरिहार्यता पर्दछ । शरीरलाई पूर्ण स्वस्थ राख्न, आनन्दयुक्त घर भवनको निर्माण गर्न, आज्ञाकारी, बुद्धिमानी, चतुर पुत्र प्राप्ति, सुशील धर्मपत्नी एवं जीवनमा प्रर्याप्त धन-सम्पति कमाउन, यश-कीर्ति फैलाउन, हर प्रकारका पूर्णता प्राप्त गरी भोग र मोक्ष दुवै प्राप्त गर्नको लागि माता अन्नपूर्णाको कृपाको आवश्यकता भएको शास्त्रमा पाइन्छ ।

# माता अन्नपूर्णाको व्रतविधि

प्रतिवर्ष मार्गशीर्षको पूर्णिमा माता अन्नपूर्णाको जयन्ती हो । मार्गशीर्ष कृष्णपक्षको पञ्चमीमा प्रारम्भ गरी मार्गशीर्ष शुक्लपक्षको षष्ठी तिथिमा सत्र दिनपछि अन्नपूर्ण व्रतपूजा समाप्त हुन्छ । व्रतपूजा विधिमा रेशम वा सुती धागोको सत्र गाँठको डोरो माता अन्नपूर्णको प्रतिमामा राखी धूप, दीप, नैवेद्यका साथ पूजा गर्नुपर्छ । पूजामा हरियो धानको १७ बाला (वा नयाँ चामल) सहित पूजा गर्दा भगवती अन्नपूर्ण प्रसन्न हुन्छिन् भन्ने विश्वास पाइन्छ । हे अन्न प्रदान गर्नुहुने माता अन्नपूर्ण ! मलाई पशु, पुत्र, यश, लक्ष्मी, आयु, आरोग्य एवं ऐश्वर्य प्रदान गर्नुहोस् भनी उहाँलाई दण्डवत् नमस्कार प्रार्थना गर्ने गरिन्छ । पूजा, प्रार्थना गर्दा दाहिने हातको मूल (नाडी) मा डोरो (व्रतालु स्त्री भएमा बायाँ नाडीमा) बाँध्नुपर्छ । हे माता ! हजूर सर्वशक्तिमयी हुनुहुन्छ, हजूरको नामै अन्नपूर्ण, सबै पुष्पको स्वरूप यो दूबो समर्पित गर्दछु । यसरी १६ दिनसम्म डोरोसहित गरिएको पूजाको अन्तिम सत्रौं दिनमा व्रतालुले सेतो स्वच्छ वस्त्र धारण गरी पूजा कक्षमा बसी धानका बालाहरूको कल्पवृक्ष बनाई माता अन्नपूर्णको प्रतिमा स्थापित गरी बायाँतर्फ अन्नले भरिएको सुन्दर पात्र राख्नुपर्छ ।

कार्तिक पूर्णिमाको पूजनमा काठमाडौँको असनस्थित अन्नपूर्ण मन्दिर अगाडि विभिन्न थरिका गेडागुडीले सजाइएको मण्डप ।

अञ्जुलीमा फल लिई *'एहि एहि देवि ! देवेशि ! देव-देवेश-वल्लभे ! गृहाणेमां मया दत्तां पूजां देवि ! नमोऽस्तुते'* भनी देवीलाई आवाहन गरौं । महादेव शंकरकी प्राणवल्लभा देवेशी अन्नपूर्णले मेरो पूजालाई स्वीकार गर्नुहोस् भनी आवाहन गर्दै *नन्दायै पाद्यं, गिरीशकान्तायै अर्घ्यम्, उमायै आचमनीयम्, जगन्मात्र्यै मधुपर्कं, गिरिजायै चन्दनं-* यसरी पाद्य, अर्घ्य, आचमन, मधुपर्क र चन्दन चढाऔं । *' नमो गिरीन्द्र तनये जगन्मंगल मंगले । श्री महेशात्म महिषि ! स्कन्दमातर्नमोऽस्तुते ॥'* प्रार्थनाका साथ धूप, दीप नैवेद्य, वस्त्र, सिन्दूर, आभूषण, पान, सुपारी आदि सुगन्ध सौभाग्यादि द्रव्य भगवतीमा समर्पण गरौं । माता अन्नपूर्णको प्रदक्षिणा र साष्टाङ्ग प्रणाम गरी नाडीमा बाँधेको डोरो भगवतीको चरणमा चढाऔं । तीनै लोकको पालन र कल्याण गर्ने हे माता म हजूरको दास हुँ । सम्पूर्ण सम्पत्ति प्रदान गर्ने यो धागो (डोरो) लगाई मैले व्रत सम्पन्न गरें, यो धागो हजूरले ग्रहण गर्नुहोस्, मलाई श्रेष्ठ वर प्रदान गर्नुहोस् भनी प्रार्थना गरौं । ब्राह्मणबाट कथा श्रवण गरी ब्राह्मणलाई १७ वटा पात्रहरूमा पकाएको भोजन गराई, यथाशक्य दान दक्षिणा दिनुपर्दछ । त्यसपछि सधुवाहरूलाई पनि भोजन गराई आफूले पनि बिना नूनको भोजन गरी रात्रिमा भगवतीको संकीर्तन गर्नुपर्छ ।

पूजामा प्रयोग गरिएका धानका बाला, चामल आफैले भोजन गर्नुपर्छ, अरूलाई कदापि दिनुहुन्न । यसरी १७ वर्षसम्म लगातार माता अन्नपूर्णको व्रत बसी उद्यापन गरी भगवतीको महोत्सव गर्नुपर्छ । माता अन्नपूर्णको व्रत आराधनाको प्रभावले धनधान्यले सम्पन्न भई कहिल्यै दुःख भोग्नुपर्ने छैन । जसले माता अन्नपूर्णको मन्दिरमा ४० दिन लगातार दीप प्रज्ज्वलन गर्छ उसका सम्पूर्ण मनोकामनाहरू माताले पूर्ण गर्नुहुने मान्यता पनि रहिआएको छ । चैत्र शुक्ल सप्तमी तिथिमा माता अन्नपूर्णको परिक्रमा गर्दा विगत जन्मका पापहरू नष्ट हुने उल्लेख छ । जय गुरुदेव !

# अन्नपूर्ण साधना

सामान्य मानिसबाट महामानव बन्ने प्रक्रिया, शवरूपी जीवनबाट शिवत्वमा पुग्ने माध्यम, जुनसुकै क्षेत्रमा पनि अद्वितीय बन्न सहयोग गर्ने यदि यस संसारमा कुनै माध्यम छ भने त्यो केवल साधना नै हो । साधना शब्द हेर्दा सामान्यजस्तो लागे पनि यसको आवश्यकता, अपरिहार्यता आफैमा विशाल र व्यापक छ । साधनात्मकरूपमा अघि बढ्न चाहने प्रत्येक व्यक्तिले उपयुक्त मार्गनिर्देशन एवं सद्गुरुको अभावमा आफ्नो मार्गलाई निरन्तरता दिन सकिरहेका हुँदैनन् । यसरी एकातिर मानिसहरूले साधनाको अर्थ बुझिरहेका हुँदैनन् भने अर्कोतिर बुझ्नेहरूले उपयुक्त किसिमको मार्गनिर्देशन पाइरहेका हुँदैनन् । व्यक्तिलाई पूर्णतामा लैजान, मानव जीवनको वास्तविक रहस्योद्घाटन गर्न साधना एक सशक्त माध्यम हो भन्ने कुरालाई सिद्धाश्रम शक्ति केन्द्रले बारम्बार दोहोऱ्याउँदै आइरहेको छ ।

प्रत्येक साधनाको आफ्नै महत्त्व हुन्छ, विशेषता हुन्छ । साधारण अर्थमा हेर्दा अन्नकी देवी अन्न एवं भौतिक सम्पदा पूर्ण गराइदिने देवी भन्ने अर्थमा माता अन्नपूर्णलाई हामी मान्दछौं । तर अन्नपूर्ण माताको साधना विशाल र व्यापक शक्ति समाहित साधना हो । विश्वका सारा जीवहरूका प्राणाधार माता अन्नपूर्ण परम कृपालु हुनुहुन्छ । माता अन्नपूर्णको वास नभएको कुनै घर छैन, कुनै परिवार छैन । मानिसको भाग्य, संस्कार र कर्मअनुसार प्रत्येक व्यक्तिले एउटा स्तरबाट माताको कृपा पाइरहेका छन् । लक्ष्मी माता खुशी भएमा पनि अन्नपूर्ण माताकै स्वरूपबाट प्रत्येकको घरमा भित्रिनुहुन्छ । लक्ष्मीको कृपा प्राप्त भए पनि यदि अन्नपूर्ण मातालाई खुशी गराउन सकेनौं भने हाम्रो उन्नति प्रगति सम्भव छैन । त्यसैले लक्ष्मी माताको पूर्ण कृपा प्राप्त गर्न अन्नपूर्ण माताको आशीर्वाद प्राप्त गर्नुपर्ने हुन्छ । अन्नपूर्ण माता पूर्णरूपले खुशी हुँदा लक्ष्मी माताको कृपा वर्षिन थाल्दछ । शरीरको लागि भौतिक अन्न, धनधान्य प्रदान गर्न र आत्माको लागि उन्नति प्रगतिको ज्ञान प्रदान गरी आत्मिक सन्तुष्टि प्रदान गर्न सक्षम जगज्जननी जगदम्बिके माता अन्नपूर्णको साधना प्रत्येक व्यक्तिले अनिवार्यरूपमा गर्नुपर्ने साधना हो । अन्नलाई ब्रह्मको रूपमा लिइन्छ । हाम्रो समाजमा अन्न फाल्न हुँदैन, सराप लाग्दछ भन्ने धारणा प्राचीनकालदेखि रहँदै आएको छ । अन्नलाई जतन गर्ने आवश्यकताअनुसार सहीरूपमा सदुपयोग गर्दै गएमा अन्नपूर्ण माता खुशी भई हामीलाई पूर्णरूपले कृपा गर्नुहुन्छ र हाम्रो अझ्री बढी भौतिक उन्नति-प्रगति हुँदै जान्छ । माता अन्नपूर्णको साधना हाम्रो जीवनमा शरीर स्वस्थ राख्न, पूर्ण भौतिक सुख, सुविधा, धनधान्यले सम्पन्न हुन, हरेक इच्छा मनोकामनाहरू पूरा गर्दै मानसिक शान्तिका साथ सम्पूर्ण उन्नति-प्रगति प्राप्त गर्न सक्ने साधना हो ।

अन्नपूर्ण माताका साधनाका विभिन्न स्तरहरू छन्, हजारौं मन्त्रहरू छन् । यसरी हजारौं तौर तरीका दिव्य मन्त्रहरूबाट साधना गरी भौतिक सम्पन्नताका साथ आध्यात्मिकरूपमा पूर्णता गराइदिने अन्नपूर्ण साधनाको वर्णन सम्भव नै छैन । जय गुरुदेव !

# धान्य लक्ष्मीको रूपमा अन्नपूर्ण

या देवी सर्व भूतेषु क्षुधारूपेण संस्थिता ।
नमस्तस्यै नमस्तस्यै नमस्तस्यै नमो नमः ॥

लक्ष्मीको अभिप्राय केवल धन मात्रै होइन । धन, मुद्रा त लक्ष्मीको एउटा चलायमान स्वरूप हो जुन दैनिक व्यवहारमा लेनदेनको रूपमा प्रयुक्त हुन्छ । लक्ष्मीको वास्तविक स्वरूप 'श्री' हो र यी श्रीरूपी लक्ष्मी आफ्ना अष्टस्वरूप धान्यलक्ष्मी, धनलक्ष्मी, धैर्यलक्ष्मी, विद्यालक्ष्मी, जयलक्ष्मी, वीर्यलक्ष्मी, गजलक्ष्मी र सौभाग्यलक्ष्मीको रूपमा प्रकट हुन्छिन् । माता लक्ष्मीका साधना र सिद्धि यिनै अष्टस्वरूपका नै सिद्धि हुन् ।

जीवनका चार पुरुषार्थ धर्म, अर्थ, काम र मोक्ष हुन् । यिनमा प्रथम पुरुषार्थ धर्मको तात्पर्य यो हो कि 'धर्म सः इति धारयते' अर्थात् जीवनमा जुन कुरा धारण गर्न योग्य छ त्यसलाई धर्म भनिन्छ । उपनिषद्‌को यस अर्थबाट यो स्पष्ट हुन्छ कि हिन्दु, मुस्लिम, ईसाइ, यहूदी धर्म होइनन्, सम्प्रदाय हुन् र विभिन्न गुरुहरूले आफ्नो मतानुसार धर्मको व्याख्या गरेर आफ्नो मत, सम्प्रदायलाई अघि बढाए । वास्तविक तथ्य त यो हो कि यदि हामीले गीता, कुरान, बाइबल इत्यादि सारा ग्रन्थलाई एकैसाथ खोलेर पढ्यौँ भने तिनीहरूमा धेरै कुराहरू समान देखिन्छन् । सबै ग्रन्थहरूमा यही लेखिएको पाइन्छ कि हामीले प्रकृतिका देवता जल, अग्नि, पृथ्वी, वायु र आकाशका नियमहरूको पालन गर्नुपर्दछ । यी तत्त्वहरूको शरीरमा बराबर समायोजन हुनु आवश्यक छ, पशु र वनस्पतिको रक्षा गर्नुपर्दछ, आहार-विहार-विचार शुद्ध हुनु आवश्यक छ । मनमा करुणा, दयाको भावना हुनुपर्दछ र अरूप्रति असल व्यवहार हुनुपर्दछ ।

यसप्रकार यी सबैबाट संसारमा जीव अथवा मनुष्यको संस्कारको रचना हुन्छ । यही संस्कारबाट जीवनको निर्माण हुन्छ । यसैकारण मनुष्यले निरन्तर प्रगति गरिरहेको छ । सबै धर्ममा श्रेष्ठ संस्कारलाई नै विशेष बल दिइएको पाइन्छ । यो संस्कार र विचार मनुष्यलाई आफ्नो समाज, चारैतिरको वातावरण, कुल, परिवार, जाति इत्यादिबाट प्राप्त हुन्छ । यसैले धर्मलाई जीवनको आधार मानिएको छ । धर्मबिना जीवनको कल्पना सम्भव छैन । हिन्दु मतमा साक्षात् देवीदेवताहरूको अस्तित्व मानिएको पाइन्छ, मुस्लिम र ईसाइ मतानुसार एक ईश्वरीय शक्ति छ जसको प्रतीकस्वरूप, दूतस्वरूप, देवस्वरूप पैगम्बर मोहम्मद तथा ईसाइहरूका ईसा मसीह हुन् ।

सामान्यरूपमा अर्थको तात्पर्य धन अर्थात् रूपैयाँ पैसाको रूपमा मानिन्छ । तर यो त आफैमा अत्यन्त सीमित अर्थ हो । केवल रूपैयाँ पैसा इत्यादिबाट जीवन चल्न सक्दैन । यो त अर्थको एउटा सानो रूप हो । यसैले हामीले हिन्दु मान्यतामा अर्थ को तात्पर्य लक्ष्मीलाई मान्यौँ । सामान्यरूपमा लक्ष्मीको जुन स्वरूप देखिन्छ त्यसभन्दा नितान्त फरक स्वरूप छ लक्ष्मीको । लक्ष्मीका आठ स्वरूपलाई जीवनको आधार बनाएमा जीवन धन्य हुन्छ, यही नै पूर्ण जीवन हुन्छ ।

जीवनमा अन्नको प्रधानता सर्वाधिक छ । यो मान्यता रहिआएको छ कि जस्तो अन्न ग्रहण गर्दछौँ, त्यस्तै हाम्रो विचार बन्दछ । दीपावलीमा लक्ष्मी माताको प्रतीकस्वरूप उहाँको दायाँ बायाँ अन्नले भरिएका दुई पात्र राखिन्छ । यसको तात्पर्य यही हो कि हाम्रो घरमा धान्यको भण्डार पूर्ण रहोस् र जीवनमा कहिल्यै पनि अन्नको अभाव नरहोस्, प्रकृति माताले हामीलाई सधैँ श्रेष्ठ अन्न प्रदान गर्दै रहून् । जसरी प्रकृतिमा निरन्तर अन्नको बाली निरन्तर बढिरहन्छ र आफ्नै बीजबाट नयाँ फसल तयार भइरहन्छ त्यसरी नै जीवनमा पनि प्रतिवर्ष नवीनता आइरहोस् र हामीले श्रेष्ठ र शुद्ध अन्न ग्रहण गर्दै रहन पाऔँ, यसैले भोजनको नियम बनाइयो । यसैले अन्नलाई देवता मानियो । जय गुरुदेव !

# उपत्यकामा धान रोपाईं

(अन्नपूर्ण मातालाई अन्नकी अधिष्ठात्री देवीको रूपमा लिइन्छ । हामी नेपालीहरूको मुख्य खाना भनेकै अन्न हो । अन्नमध्ये पनि बहुप्रचलित धान हो । कृषिप्रधान देश नेपालको काठमाडौँ उपत्यकामा धान खेतीको शुरुआत, यसका विविधता, किंवदन्ती आदिका बारेमा भुवनलाल प्रधानको 'काठमाडौँ उपत्यकाका केही सांस्कृतिक छिर्कामिर्का' पुस्तकबाट साभार गरिएको निबन्ध प्रस्तुत छ ।)

हाम्रो नेपाल कृषिप्रधान देश हो । काठमाडौँ उपत्यका यस देशकै एक प्रमुख अङ्ग भएको हुनाले यो पनि कृषिप्रधान रहिआउनु स्वाभाविकै हो । तर इतिहासमा के देखिन्छ भने काठमाडौँ उपत्यकामा ई.पू. पाँचौँ शताब्दीको शुरुताकासम्म धान रोप्ने चलन थिएन । प्राचीन कपिलवस्तु, कोलीय (देवदह) आदि तराई क्षेत्रमा ई.पू. सातौँ शताब्दीका राजा जयसेन, उनका छोरा राजा सिंहहनु, उनका पनि छोरा राजा शुद्धोदन (बुद्धका पिता) हरूकै समयमा धान रोपाइँ महोत्सव सरकारीस्तरमा भव्यरूपमा मनाउने परम्परा कायम भइसकेको ऐतिहासिक तथ्य बौद्ध साहित्यबाट देखिन्छ । त्यसताका यस उपत्यकाका अधिकांश निवासीहरू किराँत र नेवारहरूले खेतमा धान रोप्न जानेका थिएनन् वा रोप्न चाहँदैनथे । ई.पू. ४९६-३ तिर कोशलराज विडुडभले कपिलवस्तु, कोलीय राज्यहरू ध्वस्त पारेर शाक्यहरूको नरसंहार गरेपछि केही शाक्यहरू काठमाडौँ उपत्यकासम्म पनि शरण लिन आए । त्यस्तै, मगधराज अजातशत्रु (ई.पू. ४९१-५५९) ले लिच्छवी गणराज्य, मल्ल गणराज्यहरूमाथि कब्जा जमाएपछि उनीहरूमध्ये कैयौँ लिच्छवीहरू पनि उपत्यकामा आइपुगे । ती शाक्यहरू, लिच्छवीहरू पनि बसाइँ सर्दै उपत्यकामा आइपुगे ।

ती शाक्यहरू, लिच्छवीहरूले शरणार्थीको रूपमा यहीँ बसोबास गरेपछि यहाँ खेत खनेर धान रोप्ने गरेका हुन् । त्यसताका उपत्यकाबासी भने पृथ्वीमातालाई हतियारले खनेर घाउ पार्नु हुँदैन, अनिष्ट हुन्छ भन्ने दृढ विश्वास गर्दथे । त्यसैले पृथ्वीमाता अर्थात् जमिन खनेर धान रोप्नु त परै जाओस्, जमिनमाथि कोदाली चलाउनसम्म पनि हिचकिचाउँथे ।

त्यसैताका बलबल नाउँ गरेका एकजना भक्भके लठेब्रेले यसो भने, 'म परिवार नभएको एक्लो मान्छे हुँ । म सर्वप्रथम जमिन खनेर धान रोप्छु । अनिष्ट, खराबी जे-जे हुनुपर्ने जति मलाई नै हुनेछ, होस् । मर्नु परे पनि म मर्छु, म मरेर अरू कसैलाई मर्का पर्दैन । म कति पनि डराउन्न, जस्तोसुकै दुःख-कष्ट भोग्न पनि तयार छु । मरे मै मरुँला ।'

अनि उनले कोदालीले जमिन खनी धान रोपे । उपत्यकामा प्राचीन निवासीहरूले धान रोपेको यो पहिलो घटना थियो । उनलाई कुनै ग्रहदशा, अनिष्ट आदिले छुन सकेन, बरू उनको खेत यथासमयमा हरियो भरिलो भयो, धानका बालाहरू लहलहाए । त्यसैबेलादेखि प्राचीन निवासीहरूले पनि उपत्यकामा नहिचकिचाइकन धान फलाउन थाले । यसरी बलबल लठेब्रे उपत्यकामा धान-रोपाइँका अगुवा बने ।

सिल्भाँ लेभीको 'ले नेपाल' शीर्षक नेपालको इतिहासमा चर्चित उपरोक्त घटना कुन राजाको राज्यकालमा घटेको थियो भनेर प्रष्ट नभए पनि के कुरो निश्चित हुन्छ भने यो घटना प्रसिद्ध लिच्छवी राजा मानदेव प्रथम (शक सं. ५१३-५२६, ईस्वी सन् ५९१-६०४/५) सम्मको बीचको अवधिमा घटेको हुनुपर्दछ किनभने उपत्यकामा धान कुटेर चिउरा बनाउने एवं चामलको पिठोको 'योमरी' बनाउने चलन पहिलो ठकुरी राजा अंशुवर्मा (मानदेव द्वितीय सं. २९-४५, ईस्वी ६०५-६२१) को राज्यकालमा मात्र शुरु भएको भनेर वंशावलीमै लेखिएको छ ।

फेरि यहाँ अत्यन्त प्रचलित गोरखनाथ-मच्छेन्द्रनाथ प्रसंगअनुसार महायोगी मच्छेन्द्रनाथको आगमनको फलस्वरूप यहाँको लामो खडेरीको अन्त्य र खाद्यान्न फसलको फलिफाप भएको हुनाले यहाँका किसानहरूले उहाँलाई वर्षा र खाद्यान्नको देवता मानी पूजा गरेका थिए र आजसम्म पनि गर्दैछन् । तर महायोगी मच्छेन्द्रनाथ र श्री श्री महायोगी गुरु गोरखनाथले काठमाडौं उपत्यकाका किसानहरूलाई आकाशे खेतीको भरोसामा नपर्खी समयमै अग्ला ठाउँबाट होचा ठाउँमा कुलाहरूद्वारा पानी ल्याएर आ-आफ्ना खेतहरू सिँच्न पहिलोपटक सिकाउनुभएको हुनाले तिनीहरूले उहाँलाई खाद्यान्न र वर्षाका देवताको रूपमा पूजा गरेका थिए भनेर लेखेका छन् । यस प्रसंगबाट यहाँका किसानहरूले ईस्वीको आठौँ शताब्दीतिर मात्र कुलो खनेर खेतमा सिँचाई गर्न सिकेको जानकारी मिल्दछ ।

हुन त नेपालकै धान रोपाइँको कुरा गर्ने हो भने यहाँ धान उम्रने प्राकृतिक प्रक्रिया हजारौँ वर्षदेखि चलिआएको देखिन्छ । नेपालका विभिन्न क्षेत्रहरूमा धान वा वनस्पति विशेषज्ञहरूले प्राचीन जंगली जातका धानका कैयौँ प्रजातिहरू भेट्टाएका छन् जसमध्ये कति त लोप भइसके भने कति त अझ पनि पाइन्छन् । यस यथार्थबाट उपरोक्त तथ्यलाई पुष्टि मिल्दछ । फेरि देशको भौतिक र भौगोलिक स्थितिबाट पनि त्यस तथ्यतिर सघाउ पुग्छ किनभने टेथिस सागरको सतहलाई उठाउने गंगा-सिन्धु नदीको स्रोत मानसरोवरलाई काखी च्यापेर बसेको हिमालय पर्वतको फेदीमा अवस्थित नेपाली भूभाग स्वत: गंगा मैदानभन्दा पुरानो हो र यहाँ करोडौं वर्ष अघिदेखि वनस्पति, जीवजन्तु मात्र भएको होइन पछि रामापिथेकस प्राग्मानवसम्मको उपस्थिति र अवशेष रहेको पाइएको छ । फेरि नेपालमा विभिन्न जलवायु भएका ठाउँहरूमा मार्सी, कालोमार्सी, मन्सरा, कृष्णभोग, थापाचिनियाँ, तौली, अरुवा, ताइचुङ आदि विभिन्न जातका धानहरू आजकाल पनि फलिरहेकै छन् । काठमाडौँ उपत्यकामा धान-रोपाइँको सम्बन्धमा पनि उपरोक्त दृष्टिकोणले पहिचान गर्नु श्रेष्ठ हुनेछ ।

अब मूल विषय काठमाडौँ उपत्यकामा धान-रोपाइँतिर नै लागौँ । यहाँको धान रोपाइँमाथि चर्चित बलबल वा मच्छेन्द्रनाथको युगको तरीकामा उल्लेखनीयरूपले सुधार वा प्रगति भएको छैन भन्नु अत्युक्ति होओइन । खेतीमा आधुनिकता, वैज्ञानिकता वा यन्त्रीकरण ल्याउन सकिएको छैन । पहाड र तराईतिर खेतमा हलो जोत्न गोरु-बयल-राँगाको सहारा लिइन्छ । त्यतिसम्म भए पनि भला ! काठमाडौँ उपत्यका त उपत्यकाबासीहरूको भन्दा बढी पशुपतिनाथको क्षेत्र मानिएको हुनाले यहाँ पशुपतिनाथको वाहन बसाहा, बयल, गोरु त के राँगाद्वारा पनि हलो जोत्न हुँदैन ।

यहाँका किसानहरूले आ-आफ्ना पाखुराको श्रम र कोदालीको सहाराले मात्र खेत खन्छन् । यहाँ प्रयोग गरिने कोदालीको पाता लामो, चाक्लो बिँड छोटो भएको हुन्छ– यसको आफ्नै विशेषता छ । बाहिर यस्तो खालको कोदाली प्रयोग भएको देखिन्न । यो कोदाली 'त' अक्षरजस्तो आकारको भएको हुनाले यस अक्षरलाई "कोदाली पाते 'त'" भन्ने चलन भएको बुझिन्छ । त्यस्तै, यहाँका अधिकांश किसानहरूको जाति ज्यापुहरूले प्रयोग गर्ने कोदालीजस्तै हँसिया पनि आफ्नै खालको हुन्छ– चुच्चाको घेरा ठूलो, घुमाउरो हुन्छ । फेरि धान खेतमा घाँस, पातपतिङ्गर उखेल्दा, सोहोर्दा यहाँका किसानहरूले नाडीमा बेर्ने 'ल:कल:' भनिने बाँसका स-साना खोक्रा लाम्चो टुक्राहरूको सिक्रीजस्तो माला, घेराको छेउमा बार भएको, प्वालैप्वाल भएको, बार नभएको विभिन्न किसिमका खर्पनहरू अन्यत्र प्रयोग भएका देखिन्नन् । यहाँ मलको रूपमा खेतमा प्रयोग गरिने कालो काँचो माटो पनि उपत्यकाकै विशेषता हो । हाल यस्तो भूमिगत काँचो माटोको अभाव भइसकेको हुनाले यसको प्रयोग बन्द भइसकेको छ ।

रोपाइँ उपत्यकाको बाहिर धादिङ, रबी आदि ब्याँसीहरूका पानी लाग्ने ठाउँहरूमा चैत्रको अन्त्य, वैशाखको शुरुतिर नै गरिन्छ । तराईमा भने आकाशे पानीले रोपाइँ गर्नुपर्ने हुनाले रोपाइँ श्रावणतिर मात्र गरिन्छ । अन्यत्र जहिले भए पनि उपत्यकामा रोपाइँ याम जेठको अन्त्यतिर वा असारमा नै पर्दछ । पानी लाग्ने ठाउँमा अलि चाँडै हुन्छ, पानी नलाग्ने

ठाउँमा आकाशे पानी बर्सेपछि मात्र हुन्छ । धानको बोट उमार्न ब्याङमा बीउ काढ्ने याम भने आ-आफ्ना खेतमा पानी लाग्ने ताक हेरेर कतै जेठमा वा कतैकतै असारको शुरुमा हुन्छ । यसरी उपत्यकामा रोपाइँ भनेको सिठी नख: अर्थात् ज्येष्ठ शुक्ल, कुमार षष्ठीदेखि गथामुग: (श्रावण कृष्ण त्रयोदशी, घण्टाकर्ण चाड) अगाडिसम्म पर्दछ ।

रोपाइँको यामभरि किसानहरू अरू कामको स्थगन वा उपेक्षा गरेर भए पनि धेरैजसो यही काममा व्यस्त रहन्छन् । यस रोपाइँको कामलाई अग्रिमता दिनाको लागि होला उपरोक्त अवधिभरि कुनै चाडबाड पारिएको छैन । उपत्यकामा भिन्नाभिन्नै ऋतुअनुसार भिन्नाभिन्नै बजाइने बाजाहरू पनि यस अवधिभित्र बजाइन्नन् । सिठीको दिनदेखि गथामुग: नसिद्धिएसम्म धिमे, खिं, दाफा आदि राष्ट्रिय बाजाहरू बजाउन हुँदैन भनेर सिठीको दिन बाजाहरूलाई पनि पूजा गरी थन्क्याउने परम्परागत चलन छ । गीत गाइए पनि रोपाइँ यामको गीत अर्थात् असारे गीतहरू मात्र गाइन्छन् ।

रोपाइँको यो अवधिभरि टोली-टोलीमा बाँडिएका किसानका टोलीहरू आफू-आफूमा आलापालो गरी एक टोलीले अर्कोलाई साझा काम गराउँछन् । तराईतिर यसैलाई 'पर्म' भनिन्छ । यस अवधिभरि किसानहरू एकदमै बेफुर्सदका साथ पारस्परिक सहयोग गरिरहन्छन् । त्यसैकारणले भेट्टाउन गाह्रो मान्छेसित सम्पर्क राख्नु अथवा भ्याउन नसकिने काम गर्नुलाई 'रोपाइँ यामको ज्यापुलाई भेट्टाउनुजस्तो' भन्ने आहान प्रचलित भएको हो ।

यस यामभरि उपत्यकामा यताउति खेतहरूमा रोपाइँका दृश्यहरू देखा पर्दछन्– हेर्दैमा रमाइलो लाग्ने । लाठेहरू कोदाली टाउको माथि-माथिसम्म उचाली खेत खनिरहन्छन्, कोही खनिएका ठाउँमा डल्ला फोर्छन्, बाउसेहरू हिले माटो सम्याउँछन् वा आली काट्छन्, दाँदे कुदाउँछन् वा फेउरी तान्छन् । रोपाहारहरू, जसमध्ये धेरैजसो महिला हुन्छन्, रोप्नलाई ठीक पारिएको हिले, पन्यालो माटोभित्र धानका कलिला बीउ-बोट एउटा-एउटाको लाम मिलाएर गाड्दै अर्थात् रोप्दै जान्छन् । यसरी बीउ-बोट रोप्नु पनि एउटा कला हो– हातको सीप भएका, छिटाछरिटा रोपाहार महिलाहरू अगाडि-अगाडि पर्दै जान्छन्, हात छिटो छिटो चलाउन नसक्ने महिलाहरू पछिपछि पर्छन् । थरिथरि काममा सक्रिय रहने यी पुरुष र महिला कामदारहरू आ-आफ्ना काममा आँखा, हात, गोडा चलाउँदै मुखले भने असारे गीतको लयमा थरिथरिका गीत गाइरहेका हुन्छन् । यसरी गीत गाउने काममा स्त्री र पुरुषहरूको बीचमा कहिलेकाहीँ आलोपालो गरी दोहोरी गीत गाउनामा पनि प्रतियोगिता हुन्छ । यिनीहरू यसरी गाउने रमिता गर्दागर्दै आपसमा हिले माटोले छ्यापाछ्याप पनि गर्छन् ।

रोपाइँ चालू रहेको खेतमा यस्तो तमासा हेर्न बटुवाहरू बाटाका छेउछेउ खेतका डिलनिर उभिरहन्छन् वा बसिरहन्छन् । खेतधनीका नातेदार, छरछिमेकी, इष्टमित्रहरू खेतमा काम गरिरहेका यी खेतालाहरूलाई चुरोट, पानमसला आदि खानेकुरा बाँड्छन्, जान्नेहरू गीत गाउनामा पनि साथ दिन्छन् । खाना ख्वाउनु अगाडि-पछाडि, बीच-बीचमा काम गर्ने सबैलाई जाँड ख्वाइन्छ । तर खेतालाहरूलाई घामपानीको परवाह हुँदैन, आ-आफ्ना काम एकनासले गरिरहन्छन् ।

दिनभरि काममा संलग्न सबैको हारगुहारबाट खेतमा रोपाइँ सिद्धिएपछि खर्पन बोकेका, पोको पन्तरो बुइँ चढाएका, कुटो, कोदाली आदि सामान कुम्ल्याएका किसान-किसानीहरू लाम लाग्दै असारे गीत घन्काउँदै घर फर्कन्छन् । यसरी यिनीहरूको ताँती शहर वा बस्तीभित्र पुग्दा स्थानीय बासिन्दाहरू, विशेष गरेर केटाकेटीहरू, लाम लागेर हेरिरहन्छन् । रोपाइँको अवधिमा किसानहरूको यो दृश्य हेर्नु पनि रमाइलो लाग्छ ।

असार महिनामा मात्र गाइने यी गीतहरू देशका विभिन्न कुनाकाप्चामा गाइने भए पनि ठाउँअनुसार यसका लयहरू फरक हुन्छन् । कतैकतै यसरी रोपाइँ सकेर खेतबाट गीत गाउँदै घरमा फर्केको टोली आइपुगेपछि गाउँलेहरूले खेतधनीलाई आशीर्वाद दिन्छन् । अनि नाङ्लामा चामल, रूपैँया राखेर बत्ती बालिन्छ र सामानहरू बिसाउन थालिन्छ । त्यसपछि मात्र असारे गीत गाउन रोकिन्छ, रोपाइँ सिद्धिएको मानिन्छ ।

काठमाडौँ उपत्यकामा धान रोपाइँका नायक बलबलकै चर्चा गरौँ । उनको मृत्युको केही कालपछि उनको काठको मूर्ति बनाएर पाटनस्थित बुंगमति लोकेश्वर (रातो मच्छेन्द्रनाथ) को मन्दिर रहेको त:बाहालको पूर्वी ढोकाबाहिर स्थापित गरियो । केही वर्षअघि बलबलको उक्त प्राचीन जीर्ण मूर्तिको चोरी भएको थियो । त्यहाँ हालै काठकै अर्को मूर्ति स्थापित गरिएको छ ।

बलबलको उक्त पाटनस्थित मूर्तिलाई कालान्तरमा कृष्णका केही भक्तहरूले भागवत् पुराणको दशौँ स्कन्धमा वर्णित एक पात्र वासुदेवका जेठा छोरा बलराम (कृष्णका दाइ) को मूर्ति भन्न थाले । यहाँनिर के सोच्नु आवश्यक हुन्छ भने केही भक्तहरूले कृष्णलाई विष्णुको अवतार भनेर जति पूजा-आजा, भक्तिभाव गरे पनि ब्रह्माको पूजा गर्ने चलन नभएजस्तै बलरामको पनि मूर्ति बनाएर पूजा गर्ने चलन छैन । जय गुरुदेव !

# अन्नपूर्णाष्टक स्तोत्र

मनलाई सांसारिक पदार्थबाट हटाएर जगज्जननी जगदीश्वरीतर्फ लगाउने सबैभन्दा राम्रो उपाय भक्ति नै हो। जुन मनुष्यले भक्तिभावपूर्वक कुनै पनि देवी अथवा देवको स्तुति गर्दछ भने त्यस समयमा जुन आनन्द, जुन भक्ति रस उसले प्राप्त गर्दछ त्यो अवर्णनीय हुन्छ। आदिगुरु भगवान् शंकराचार्यद्वारा प्रणीत यो अन्नपूर्णा स्तोत्र एउटा अपूर्व स्तोत्रको रूपमा रहेको छ। जसले यो स्तोत्रको श्रद्धापूर्वक प्रात:काल पाठ गर्दछ, उसलाई माता पार्वतीले प्रसन्न भएर धन धान्य आदिले परिपूर्ण गर्नुहुन्छ। जो मनुष्य सहजै आफ्नो दु:ख दारिद्र्य अन्त गर्न चाहन्छन्, उनीहरूले जगन्माता अन्नपूर्णा देवीको आराधनालाई नै सर्वोपरि मानेर आफ्नो महान् धर्म एवं कर्तव्यको पालन गर्दछन्। यसो गरेमा मनुष्यको दु:खदायक जीवन सुखपूर्वक व्यतीत हुन जान्छ र उसको जीवन एक सात्विक सफल जीवन बन्न जान्छ।

**नित्यानन्दकरी वराभयकरी सौन्दर्यरत्नाकरी**
**निर्धूताखिलघोरपावनकरी प्रत्यक्षमाहेश्वरी।**
**प्रालेयाचलवंशपावनकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ १॥**
**नानारत्नविचित्रभूषणकरी हेमाम्बराडम्बरी**
**मुक्ताहारविलम्बमानविलसद्वक्षोजकुम्भान्तरी।**
**काश्मीरागुरुवासिता रुचिकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ २॥**
**योगानन्दकरी रिपुक्षयकरी धर्मार्थनिष्ठाकरी**
**चन्द्रार्कानलभासमानलहरी त्रैलोक्यरक्षाकरी।**
**सर्वैश्वर्यसमस्तवाञ्छितकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ ३॥**
**कैलासाचलकन्दरालयकरी गौरी उमा शंकरी**
**कौमारी निगमार्थगोचरकरी ओंकारबीजाक्षरी।**
**मोक्षद्वारकपाटपाटनकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ ४॥**
**दृश्यादृश्यप्रभूतपावनकरी ब्रह्माण्डभाण्डोदरी**
**लीलानाटकसूत्रभेदनकरी विज्ञानदीपांकरी।**
**श्री विश्वेशमन:प्रसादनकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ ५॥**
**उर्वी सर्वजनेश्वरी भगवती माताऽन्नपूर्णेश्वरी**
**वेणीनीलसमानकुन्तलहरी नित्यान्नदानेश्वरी।**
**सर्वानन्दकरी दृशांशुभकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ ६॥**
**आदिक्षान्तिसमस्तवर्णनकरी शम्भोस्त्रिभावाकरी**
**काश्मीरा त्रिजलेश्वरी त्रिलहरी नित्यांकुरा शर्वरी।**
**कामाकांक्षकरी जनोदयकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ ७॥**
**देवी सर्वविचित्ररत्नरचिता दाक्षायणी सुन्दरी**
**वामं स्वादुपयोधरप्रियकरी सौभाग्यमाहेश्वरी।**
**भक्ताभीष्टकरी दशाशुभकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ ८॥**
**चन्द्रार्कानलकोटिकोटिसदृशा चन्द्रांशुबिम्बाधरी**
**चन्द्रार्काग्निसमानकुन्तलधरी चन्द्रार्कवर्णेश्वरी**
**मालापुस्तकपाशसांकुशधरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ ९॥**
**क्षत्रत्राणकरी महाऽभयकरी माता कृपासागरी**
**साक्षान्मोक्षकरी सदाशिवकरी विश्वेश्वरी श्रीधरी।**
**दक्षाक्रन्दकरी निरामयकरी काशीपुराधीश्वरी**
**भिक्षां देहि कृपावलम्बनकरी माताऽन्नपूर्णेश्वरी॥ १०॥**
**अन्नपूर्णे सदापूर्णे शंकर प्राणवल्लभे।**
**ज्ञानवैराग्यसिद्ध्यर्थं भिक्षां देहि च पार्वति॥ ११॥**
**माता च पार्वती देवी पिता देवो महेश्वर:।**
**बान्धवा: शिवभक्ताश्च स्वदेशो भुवनत्रयम्॥ १२॥**
**इति श्रीमच्छङ्कराचार्यविचरितमन्नपूर्णाष्टकस्तोत्रम् सम्पूर्णम्**

भावार्थ

हे माता अन्नपूर्णे, तपाईं सदा आनन्द प्रदान गर्ने देवी हुनुहुन्छ, तपाईंका हातमा निरन्तर वर र अभय मुद्रा रहन्छन्। तपाईं सुन्दरता, रूप, रत्नकी खानी हुनुहुन्छ, आफ्ना भक्तका समस्त पाप नाश गरेर भक्तलाई पवित्र गरिदिनुहुन्छ। तपाईं नै सबैकी ईश्वरी, प्रत्यक्ष माहेश्वरी हुनुहुन्छ। तपाईंले नै गिरिराज हिमालयको वंशलाई पार्वती भएर पवित्र गर्नुभएको थियो। हे माता, तपाईं काशीपुरीकी महारानी हुनुहुन्छ र तपाईं नै सम्पूर्ण संसारका लागि अन्नपूर्णा हुनुहुन्छ। अतएव सबैकी माता पनि तपाईं नै हुनुहुन्छ। तसर्थ कृपा गरेर मलाई भिक्षा दिनुहोस्॥ १॥

हे भगवती अन्नपूर्णे, तपाईं अनेक प्रकारका रत्न एवं विचित्र आभूषणहरूद्वारा सुशोभित हुनुहुन्छ। तपाईंको शरीर स्वर्णको आडम्बरबाट अलंकृत छ। तपाईंका उरोजरूपी दुई कुम्भको मध्यभाग हृदयमा लम्बायमान मुक्ताहारले सुशोभित

छ। तपाईंको शरीर कुंकुमादि सुगन्धित द्रव्यबाट कान्तिमान भइरहन्छ । तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ २ ॥

हे माता, तपाईं नै योगद्वारा सबैलाई आनन्द प्रदान गर्नुहुन्छ, आफ्ना भक्तका शत्रुहरूलाई नाश गर्नुहुन्छ, धर्म र अर्थको साधन गर्नमा तपाईंले नै सहायता गर्नुहुन्छ । तपाईंको तेज चन्द्रमा, सूर्य र अग्निसमान प्रकाशित छ । तपाईं आफ्नो पूर्ण शक्तिबाट त्रिलोककै रक्षा गर्नुहुन्छ, आफ्ना भक्तका समस्त मनोरथहरूलाई पूर्ण गरेर सम्पूर्ण ऐश्वर्य प्रदान गर्नुहुन्छ । तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ ३ ॥

हे देवी, तपाईंले कैलाश पर्वतका कन्दराहरूलाई आफ्नो स्थान बनाउनुभएको छ । तपाईं नै गौरी, उमा र शंकरी हुनुहुन्छ । तपाईं नै कौमारी र निगम (वेद, शास्त्रादि) लाई अर्थ लगाउने हुनुहुन्छ । तपाईं नै ओंकारस्वरूप बीजाक्षरी हुनुहुन्छ । हे भगवती, मोक्षमार्गको द्वार खोल्न केवल तपाईं नै समर्थ हुनुहुन्छ । तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ ४ ॥

हे माता अन्नपूर्णे, तपाईं समस्त स्थूल एवं सूक्ष्म जीवहरूलाई भोजन दान गरेर उनीहरूलाई सम्पूर्ण प्रकारका शक्तिहरूबाट सुसम्पन्न गराउनुहुन्छ । यो निखिल ब्रह्माण्ड नै तपाईंको उदररूपी पात्रमा स्थित छ । तपाईं आफ्नो शक्तिद्वारा सम्पूर्ण चराचरलाई स्वकीय कार्यहरूमा प्रवृत्त गराउनुहुन्छ । तपाईं ज्ञानरूपी दीपको शिखा हुनुहुन्छ एवं तपाईं आफ्नो विशेष चातुर्यद्वारा भगवान् विश्वनाथको मनलाई सन्तुष्ट गर्नुहुन्छ अतएव तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ ५ ॥

हे ईश्वरी, तपाईं भूमिमाथि अवस्थित भएका सम्पूर्णकै ईश्वरी हुनुहुन्छ । तपाईं नै ऐश्वर्यसम्पन्न, अन्न धनले भरिपूर्ण अन्नपूर्णा माता हुनुहुन्छ । तपाईंको कपाल निलो वर्णले शोभायमान छ। हे परमेश्वरी, तपाईं सबैलाई अन्नदान दिनुहुन्छ, सदा आनन्द र शुभ फल प्रदान गर्नुहुन्छ । तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ ६ ॥

हे परमेश्वरी, दीक्षित भएर संसारमा जसले शिक्षा प्रदान गर्दछन्, ती सबैलाई तपाईंले नै उपदेश दिनुहुन्छ, तपाईंले नै महादेवका तीनै भावहरूको विधान गर्नुभएको छ । स्वर्ग, मर्त्य र पाताल तीनै लोकमा आफ्नो मायाबलले परमेश्वरी प्रतीत हुनुहुन्छ । तपाईं नै लोकमा गंगा, जमुना, सरस्वती भएर प्रवाहित हुनुहुन्छ । जुन वस्तुको कहिल्यै नाश हुँदैन, त्यस्तो मोक्षरूपा वस्तु दिने पनि तपाईं नै हुनुहुन्छ । अभिलाषी व्यक्तिहरूका सम्पूर्ण कामना पूरा गर्ने हे माता, तपाईं नै आफ्ना भक्तजनको उन्नति गर्नुहुन्छ । तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ ७ ॥

हे महामाया, तपाईं देवी हुनुहुन्छ, भक्तकी दुःखहर्ता हुनुहुन्छ । तपाईंको शरीर विचित्र रत्नहरूका आभूषणहरूले अलंकृत छन् । तपाईं सतीरूपमा दक्षप्रजापतिको घरमा उत्पन्न भएर दाक्षायणी कहलिनुभएको छ । तपाईं स्वाभाविक सुन्दरी हुनुहुन्छ, सबै जगत्की माता हुनुहुन्छ । त्यसकारण आफ्ना स्तनहरूबाट मधुर दुग्धपान गराएर हितसाधन गर्नुहुन्छ । तपाईं सबैलाई सौभाग्य प्रदान गर्ने माहेश्वरी हुनुहुन्छ । केवल तपाईं नै आफ्ना भक्तका मनोरथलाई पूर्ण गर्नुहुन्छ र संकटलाई हटाएर शुभदायक फल प्रदान गर्नुहुन्छ । तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ ८ ॥

हे भगवती, तपाईं करोडौं चन्द्रमा, असंख्य सूर्य र अनगिन्ती अग्निसमान हुनुहुन्छ । तपाईंको मुहारको दिव्य छविले चन्द्रमाका किरणहरूलाई धारण गर्दछन् । तपाईंले सूर्य, चन्द्र र अग्नितुल्य दैदीप्यमान कुण्डल धारण गर्नुभएको छ । उज्ज्वल वर्णयुक्त हे माता, तपाईं आफ्ना एक-एक हातमा माला, पुस्तक, पाश र अंकुश धारण गर्नुहुन्छ । तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ ९ ॥

हे माता, तपाईं आफ्नो बलले सबैलाई रक्षा गर्नुहुन्छ, सबैलाई अभयदान दिनुहुन्छ । त्यसैले सबैकी माता हुनुहुन्छ, कृपासागर हुनुहुन्छ अतएव साक्षात् मोक्षपद प्रदात्री हुनुहुन्छ । तपाईं सबैको मंगलविधान गर्नुहुन्छ, निखिल विश्वको पालन पोषण गर्ने, श्रीमहादेवको श्री वृद्धि गर्ने, दक्षप्रजापतिको यज्ञमा विघ्न गरेर यसलाई क्रन्दन गराउने पनि तपाईं नै हुनुहुन्छ । हे माता, तपाईं नै सबैलाई आरोग्य दान गर्नुहुन्छ । तपाईं काशीपुरीकी अधीश्वरी हुनुहुन्छ, कृपा गरेर मलाई भिक्षा दिनुहोस् ॥ १० ॥

हे अन्नपूर्णे, तपाईं समस्त सौभाग्यहरूले सदा भरपूर हुनुहुन्छ, तपाईं कल्याणकर्ता भगवान् श्रीमहादेवको प्राणसमान प्यारी हुनुहुन्छ । अतएव हे पार्वती, ज्ञान र वैराग्यको सिद्धिका लागि मलाई भिक्षा प्रदान गर्नुहोस् ॥ ११ ॥

म केवल यही भिक्षा चाहन्छु कि हे गिरिराजकुमारी पार्वती, हे माता, महाप्रभु भगवान् शिवजी मेरा पिता र महादेवीका अनन्य भक्त मेरा बन्धुबान्धव बनून् । तीनै लोक मेरो स्वदेश होस् । यस्तो ज्ञान सदासर्वदा मेरो हृदयमा दृढ भावले स्थिर रहोस् ॥ १२ ॥

जय गुरुदेव !

# अन्नपूर्णा चालीसा

॥ दोहा ॥

विश्वेश्वर-पदपदम की रज-निज शीश-लगाय ।
अन्नपूर्णे ! तव सुयश बरनौं कवि-मतिलाय ॥

॥ चौपाई ॥

नित्य आनंद करिणी माता । वर-अरु अभय भाव प्रख्याता ॥
जय ! सौंदर्य सिन्धु जग-जननी । अखिल पाप हर भव-भय हरनी ॥
श्वेत बदन पर श्वेत बसन पुनि । संतन तुव पदसेवत ऋषिमुनि ॥
काशी पुराधीश्वरी माता । माहेश्वरी सकल जग-त्राता ॥
बृषभारूढ नाम रुद्राणी । विश्व विहारिणी जय ! कल्याणी ॥
पदिदेवता सुतीत शिरोमनि । पदवी प्राप्त कीन्ह गिरि-नंदिनी ॥
पति-विछोह दुःख सहि नहिं पावा । योग अग्नि तब बदन जरावा ॥
देह तजत शिव-चरण सनेहू । राखेहु जाते हिमगिरि-गेहू ॥
प्रकटी गिरिजा नाम धरायो । अति आनंद भवन मँह छायो ॥
नारद ने तब तोहिं भरमायहु । ब्याह करन हित पाठ पढायहु ॥
ब्रह्मा-वरुण-कुबेर-गनाये । देवराज आदिक कहि गाये ॥
सब देवन को सुजस बखानी । मति पलटन की मन मँह ठानी ॥
अचल रहीं तुम प्रण पर धन्या । कीन्ही सिद्ध हिमाचलकन्या ॥
निज कौ तव नारद घबराये । तब प्रण-पूरण मंत्र पढाये ॥
करन हेतु तप तोहिं उपदेशेउ । संत-बचन तुम सत्य परेखेहु ॥
गगनगिरा सुनि टरी न टारे । ब्रह्मा तब तुव पास पधारे ॥
कहेउ पुत्रि वर माँगु अनूपा । देहुँ आज तुव मति अनुरूपा ॥
तुम तप कीन्ह अलौकिक भारी । कष्ट उठाएहु अति सुकुमारी ॥
अब संदेह छाँडि कछु मोसों । है सौगंध नहीं छल तोसों ॥
करत वेद विद ब्रह्मा जानहु । वचन मोर यह सांचा मानहु ॥
तजि संकोच कहहु निज इच्छा । देहौं मैं मन मानी भिक्षा ॥
सुनि ब्रह्मा की मधुरी बानी । मुखसों कछु मुसुकायि भवानी ॥
बोली तुम काकहहु विधाता । तुम तो जग के स्रष्टाधाता ॥
मम कामना गुप्त नहिं तोसों । कहवावा चाहहु का मोसों ॥
इज्ञ यज्ञ महँ मरती बारा । शंभुनाथ पुनि होहिं हमारा ॥
सो अब मिलहिं मोहिं मनभाय । कहि तथास्तु विधि धाम सिधाये ॥
तब गिरिजा शंकर तव भयऊ । फल कामना संशय गयऊ ॥
चन्द्रकोटि रवि कोटि प्रकाशा । तब आनन महँ करत निवासा ॥
माला पुस्तक अंकुश सोहै । करमँह अपर पाश मन मोहे ॥
अन्नपूर्णे ! सदापूर्णे । अज-अनवद्य अनंत अपूर्णे ॥
कृपा सगरी क्षेमं करी माँ । भव-विभूति आनन्द भरी माँ ॥

कमल बिलोचन विलसित बाले । देवि कालिके ! चण्डि कराले ॥
तुम कैलास मांहि ह्वै गिरिजा । विलसी आनंद साथ सिंधुजा ॥
स्वर्ग-महालछमी कहलायी । मर्त्य-लोक लछमी पद पायी ॥
विलसी सब मँह सर्व सरूपा । सेवत तोहिं अमर पुर-भूपा ॥
जो पढिहहिं यह तुव चालीसा । फल पइहहिं शुभ साखी ईसा ॥
प्रात समय जो जन मन लायो । पढिहहिं भक्ति सुरुचि अधिकायो ॥
स्त्री-कलत्र पनि मित्र-पुत्र युत । परमैश्वर्य लाभ लहि अद्भुत ॥
राज विमुखको राज दिवावै । जस तेरो जन-सुजस बढावै ॥
पाठ महा मुद मंगल दाता । भक्त मनोवांछित निधि पाता ॥

॥ दोहा ॥

जो यह चालीसा सुभग, पढि नावहिंगे माथ ।
तिनके कारज सिद्ध सब साखी काशीनाथ ॥

# यी रुढीवादी परम्परा मात्र हुन् त ?

## तिलक तथा टीका लगाउनु

निधारको दुवै आँखीभौंको बीचमा विचारशक्तिको केन्द्र छ । योगीहरू यसलाई आज्ञाचक्र भन्दछन् । यसलाई कल्याणकारी विचारहरूको केन्द्र पनि भनिन्छ। यहाँ लगाइएको विभूत, चन्दन अथवा सिन्दूर आदिको टीकाले विचारशक्ति एवं आज्ञाशक्तिलाई विकसित गर्दछ । त्यसैले हिन्दुहरू कुनै पनि शुभकार्य गर्दा निधारमा टीका लगाउने गर्दछन् ।

भावप्रधान, श्रद्धाप्रधान केन्द्रहरूमा आश्रित नारीहरूको उत्थानका लागि ऋषिहरूले टीका लगाउने नियम चलाएका थिए । अधिकांश स्त्रीहरूको मन स्वाधिष्ठान एवं मणिपुर केन्द्रमा रहन्छ । यी केन्द्रहरूमा भय, भाव र कल्पना धेरै हुन्छ । स्त्रीहरू कल्पना एवं भावनामा नबहकिऊन्, उनीहरूको शिवनेत्र, विचारशक्तिको केन्द्र विकसित होस् भन्ने उद्देश्यले ऋषिहरूले स्त्रीहरूको लागि टीका लगाउने विधान राखेका हुन् ।

गार्गी, शाण्डिली, अनुसूया एवं अन्य कैयौं महान् नारीहरूको प्राकट्य त्यस कालखण्डका लागि मात्र नभएर यसले आजसम्म पनि त्यत्तिकै महत्ता पाइरहेको छ । यी साध्वीहरूको कोखबाट नै महान् विचारक, वीर पुरुषहरूले जन्म लिए । नारी सक्षम र सबल भएमा मात्र तिनबाट उत्पन्न हुने सन्तान प्रभावशाली हुन्छन् भन्ने सूक्ष्म रहस्यलाई दृष्टिगत गरी ज्ञानगरिष्ट ऋषि सत्ताबाट यस्ता नियमहरू प्रतिपादन गरिए जसको पालनबाट हाम्रो सर्वाङ्गीण विकास हुन सक्छ । यस्तै नियमहरूअन्तर्गत आभूषण लगाउने परम्परा पनि एउटा हो । अलंकार धारण गर्नु फेशन होइन । यो त तन र मनको उपचार गर्ने एउटा पद्धति हो । बेग्लाबेग्लै धातुहरूको प्रयोगबाट हाम्रो शरीरमा पर्ने प्रभावका बारेमा हाम्रा पूर्वजलाई जानकारी थियो । यति मात्र होइन, यी वस्तुहरूको उपयोग औषधिको रूपमा पहिले हुन्थ्यो र आज पनि भइरहेको छ, जस्तै स्वर्ण भस्म, रजत भस्म, लौह भस्म आदि ।

### पाउजु :-

यसले पैताला पोल्ने समस्या हटाउँछ, कुर्कुच्चा सुन्निनबाट जोगाउँछ, रक्तसंचारलाई व्यवस्थित गर्दछ, सायटिका रोगमा लाभदायक हुन्छ, लिम्फ ग्रन्थिहरूलाई कार्यान्वित गरेर रोगप्रतिकारक शक्ति बढाउँछ, अनेकौं प्रकारका स्त्रीरोगहरू जस्तै, मासिक धर्मसम्बन्धी, प्रसूतिसम्बन्धी, बाँझोपन, हारमोनको असन्तुलन आदिमा लाभदायक हुन्छ । स्वास्थ्य र सुन्दरताको लागि, शरीरको चेतना प्रवाहलाई व्यवस्थित गरेर आरोग्यता कायम गर्न पनि पाउजु लगाउनु आवश्यक हुन्छ । यसले कामवासनामा नियन्त्रण ल्याउँछ ।

### कुण्डल :-

हाम्रो संस्कृतिमा कान छेड्ने परम्परा पाइन्छ । यसको पनि विशेष महत्त्व रहेको छ । चिकित्सक एवं दर्शनशास्त्रीहरूको मान्यता पाइन्छ कि कान छेड्नाले बुद्धिशक्ति, विचारशक्ति एवं निर्णयशक्तिको विकास हुन्छ । वाणीको व्ययबाट जीवनशक्तिको ह्रास हुन्छ । कर्णछेदनबाट वाणीको संयममा सहायता मिल्दछ । यसबाट उच्छृंखलता नियन्त्रित हुन्छ र कर्णनलिका दोषरहित रहन्छ । यो विचार पाश्चात्यजगत्का मानिसहरूलाई स्वीकार्य हुन गयो र आजभोलि त्यहाँ फेशनकै रूपमा भए पनि कान छेड्ने होडबाजी नै चलेको छ ।

### औँठी :-

हामीले कतिपय मुद्रिका, औँठीहरूलाई औँलाहरूमा लगाएर हत्केलालाई शोभा दिइरहेका हुन्छौं । औँठी लाउँदा ऊर्जाको विकास हुन्छ, यसबाट मानसिक तनाव भाग्दछ, जननेन्द्रिय र कामवासनामाथि नियन्त्रण प्राप्त हुन्छ । पाचन प्रणाली बलियो बनाउन पनि औँठी लगाउने गरिन्छ। विभिन्न धातुहरूको प्रभाव शरीरमा बेग्लाबेग्लै हुन्छ। त्यस्तै, बेग्लाबेग्लै रत्नहरूको प्रभाव पनि शरीरमाथि फरक-फरक हुन्छ। यी रत्नहरू जडित विभिन्न धातुका औँठीको प्रयोग गरेर विभिन्न लाभ लिन सकिन्छ ।

### माला, सिक्री, हार :-

त्यस्तै, विभिन्न प्रकारका धातु एवं रत्नबाट बनेका घाँटीमा लाउने माला, सिक्री एवं हारले पनि हामीलाई धेरै लाभ प्रदान गर्दछन् । यसबाट पनि विभिन्न रोगहरू हट्दछन् । थायराइड ग्रन्थि एवं श्वास प्रश्वास प्रणालीमा यसको राम्रो प्रभाव पर्दछ ।

यदि हामीले आफ्नो परम्परालाई अज्ञानतावश रुढीवादी र नचाहिने विधि भन्ने ठान्दछौं, अनपढ एवं गँवारहरूको दैनिकी ठान्छौं भने हामीले यस्तो मानसिकता हटाउनुपर्ने बेला आइसकेको छ किनकि पूर्वजहरूका जति पनि विधि-विधान, नीति-नियम छन्, चलनचल्ती र परम्परा छन्, ती कुनै न कुनै रूपमा लाभदायक र फाइदाजनक छन्, विज्ञानसम्मत छन्। हाम्रो अज्ञान जति छिटो हट्छ, त्यति नै छिटो हामीमा पूर्वजहरूका धरोहरलाई उपयोग गर्ने बुद्धि पलाउनेछ। त्यसैले हामी अज्ञानको घोर निद्राबाट ब्यूँझनुपर्ने भइसकेको छ ।

जय गुरुदेव !

सद्गुरुदेव प्रवचनांश

# ध्यान त चेतनाको स्पर्श हो

– परमपूज्य सद्गुरुदेव
डा. नारायणदत्त श्रीमालीज्यू

*(परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले आफ्नो अवतरणकालमा ध्यानसम्बन्धी थुप्रै प्रवचन दिनुभएको छ । तिनै प्रवचनहरुमध्येबाट यसपटक केही अंश प्रस्तुत गरिएको छ ।)*

ध्यानको तेस्रो अवस्था **पश्यन्ती अवस्था** हो । यो पश्यन्ती अवस्था भनेको व्यक्तिले केवल हेर्ने प्रक्रियाको अवस्था हो । हामीले हेरिरहेका छौँ तर हामी एक आपसमा आँखाको माध्यमले हेर्छौं । एउटा फरक तरीकाबाट हेर्दा भाव बदलिन्छ । हाम्रो धारणा, चिन्तन बदलिन्छ । ठीक त्यसरी नै हेर्ने प्रक्रिया जसरी हामी टिकट लिएर सिनेमा हलमा बस्छौं ।

अगाडि पर्दामा एउटा पुरुषले स्त्रीलाई भगाएर लगिरहेको छ... र हाम्रो मनमा कुनै भाव उत्पन्न भएन । कसैको छोरा मर्‍यो... मनमा कुनै भाव उठेन, कुनै दुःख भएन । कुनै केटी धेरै नै राम्रो नाचिरहेकी छे, मनमा कुनै त्यस्तो ठूलो विकार अथवा विचार उत्पन्न भएन ।

केवल हेर्ने काम मात्रै भयो... । हेर्दाहेर्दै तीन घण्टा बित्यो र लुगा मिलाउँदै बाहिर निस्कियो तर तीन घण्टासम्म हलचल नगरीकन हेरिरह्यो र त्यसमा उसको संलग्नता भएन । पर्दामा जुन दृश्यहरू थिए तिनीहरूसँग उसले कुनै तादात्म्यता नै राखेन । त्यस पुरुषले प्रेमिकालाई भगाउँदा पनि ऊ भागेन । पर्दामा छोरा मर्दा पनि ऊ कुर्सीमा बसेर छाती पिटेर रोएन, ऊ केवल द्रष्टा मात्रै बनिरह्यो ।

जब वास्तविकरूपमा जीवनमा द्रष्टाभाव आउँछ अर्थात् यदि रुपियाँ पैसा आए पनि तटस्थ, गए पनि तटस्थ, घरमा लडाइँ-झगडा भए पनि तटस्थ, कसैले गाली गरे पनि तटस्थ, मान-सम्मान दिँदा पनि तटस्थ, यस्तो तटस्थ रहने जुन क्रिया, अवस्था छ, जब यसलाई हामीले जीवनमा उतार्न सक्दछौँ तब

हामीले 'पश्यन्ती अवस्था' प्राप्त गर्दछौं । जब यो अवस्थामा व्यक्ति हुन्छ, उसमा केवल 'द्रष्टा भाव' मात्र रहन्छ, केवल हेर्ने प्रक्रिया मात्र रहन्छ । सबै रूपबाट आफैमा स्थिर रहन्छ, न हर्ष हुन्छ, न त विषाद नै, न मनमा कुनै चिन्ता हुन्छ, न त कुनै किसिमको योजना नै । यसरी व्यक्तिले आफूलाई एउटा यस्तो स्तरमा उभ्याउन थाल्दछ जहाँ आफू लिप्त नभई, आफैमा नजोडिकन किनारामा अर्थात् छुट्टै उभिएर केवल हेरिरहन्छ । ऊ समाजमै हिँड्छ, घरमै बस्छ । उसकी श्रीमती पनि हुन्छे, छोराछोरी पनि हुन्छन्, इष्टमित्र पनि हुन्छन्, सामाजिक कार्य पनि हुन्छ, व्यापार गर्छ, नोकरी गर्छ, भगवान्को भजन गर्छ, हरिद्वार (गंगा) मा पनि नुहाउँछ, तर यी सबै केवल एक द्रष्टाभावबाट गर्दछ, त्यसमा लिप्त हुँदैन । जब यस्तो भाव स्पष्टरूपमा देखिन थाल्छ यस्तो अवस्थालाई पश्यन्ती अवस्था भनिन्छ ।

ध्यानको चौथो अवस्थालाई **अतल अवस्था** भनिन्छ । अतलको अर्थ हो अन्त थाहा पाउन नसकिने अर्थात् अत्यन्त गहिरो । जो व्यक्ति अथवा ध्यानी यस अवस्थामा पुग्दछ ऊ संसारमा भएर पनि संसारको हुँदैन । उसको परिवेश, उसको वातावरण, उसको जीवन पूरा ब्रह्माण्डमा फैलिन्छ र पूरा ब्रह्माण्ड उसको साक्षीभूत बन्दछ । त्यसपछि उसको मनमा हिन्दु, मुस्लिम, सिख, इसाईको भाव तिरोहित हुन थाल्दछ । ऊ मन्दिरमा पनि त्यही भावले जान्छ, मस्जिदमा पनि त्यही भावले जान्छ, ऊ चर्चको अगाडि पनि झुक्दछ र त्यही बिल्कुल त्यही भावले रामको अगाडि पनि झुक्दछ ।

अतल अवस्थामा पुगेको व्यक्तिमा बिस्तारै-बिस्तारै द्वैतको भाव समाप्त हुने प्रक्रिया आरम्भ हुन थाल्दछ । ऊ यस्तो गहिराइमा जान थाल्दछ जसको अन्त अथाह हुन्छ, त्यस गहिराइमा न कुनै हिन्दु हुन्छ, न त कुनै मुस्लिम नै, त्यहाँ त केवल मानव हुन्छ । त्यहाँ कुनै राग, द्वेष पनि हुँदैन । यदि कसैले उसलाई गाली गर्छ, उसको मुखमा थुक्छ भने पनि उसको अनुहारमा क्रोधको भाव प्रकट हुँदैन । हर्ष, उल्लासको वातावरणमा पनि उसको मुहारमा कुनै विशेष भाव उत्पन्न हुँदैन ।

अतल अवस्था ध्यानको अत्यधिक महत्त्वपूर्ण अवस्था हो । यस अवस्थामा पुगेको व्यक्तिले जीवनका सबै क्रियाकलाप त्यसरी नै गर्दछ जसरी समाजको अन्य कुनै व्यक्तिले गर्दछ । उसले व्यापार गर्दछ, नोकरी गर्दछ, पत्नीसँग पनि रहन्छ, ऊ पतिसँग पनि बस्दछे, तर त्यसमा कुनै प्रकारको हानी वा लाभको अवस्था हुँदैन । ऊ उच्चतामा पुग्दछ, आफूलाई सम्पूर्ण ब्रह्माण्डमा एकाकार गर्दछ । उसलाई आफ्नो छिमेकीको मृत्युमा दु:ख लाग्दछ, कुनै अन्य देशमा भएको व्यक्तिको मृत्युमा पनि दु:ख लाग्दछ र दुवै अवस्थामा समान दु:ख लाग्दछ । उसको समीप घटेको दु:खद घटनाले उसलाई जति पीडा दिन्छ त्यति नै पीडा उसलाई संसारको जुनसुकै कुनामा घटेको दु:खद घटनाले दिन्छ ।

उसको लागि देशको भावना मेटिन थाल्दछ । उसको मनमा यो भाव नै हुँदैन कि 'म नेपाल, भारत, पाकिस्तान वा अमेरिकाको निवासी हुँ ।' उसको मनमा त यही भाव हुन्छ कि 'म त सम्पूर्णताको एउटा कण हुँ।' मनुष्यताको जहाँ क्षय हुन्छ, जहाँ हानी हुन्छ त्यस कुरामा उसलाई त्यति नै दु:ख हुन्छ जति दु:ख उसलाई आफ्नो घरमा भएको क्षतिमा हुन्छ । अतल अवस्थामा भएको व्यक्ति कुनै एउटा स्थान, एउटा देश, एउटा कालमा बाँधिएको हुँदैन । ऊ व्यापक हुन्छ, उसको दृष्टिकोण व्यापक हुन्छ । ध्यानी वा साधकको यस स्थितिलाई, यस अवस्थालाई अतल अवस्था भनिन्छ ।

जब व्यक्ति अतल अवस्थालाई पार गर्दै अघि बढ्दछ, ऊ ध्यानको पाँचौं अवस्थामा पुग्दछ जसलाई **प्राण अवस्था** भनिन्छ । यस अवस्थामा पुगेको व्यक्ति जीवनको ऊर्ध्वगामी प्रवृत्तितर्फ अग्रसर भइरहेको हुन्छ । यस्तो व्यक्ति विकाररहित बन्न थाल्दछ । यस्तो व्यक्तिमा भोक र प्यासको भावना हराउन थाल्छ । म यो खान्छु, त्यो खान्छु भन्ने भावना उसमा आउँदैन । उसलाई गुलियो खाँदा कुनै प्रकारको बोध हुँदैन, तीतो खाँदा पनि कुनै प्रकारको बोध हुँदैन । यो पागलपनको स्थिति होइन । यो आफैबाट पर हटेर निर्विकार हुने स्थिति हो । यस अवस्थामा पुगेको व्यक्ति मनुष्यताको माध्यमबाट जीवित रहन्छ, शरीरको माध्यमबाट होइन । यही अवस्थाबाट नै शरीर समाप्त हुन्छ र प्राण आरम्भ हुन्छ ।

यस अवस्थाबाट अन्नमय कोष समाप्त हुन्छ र प्राणमय कोष प्रारम्भ हुन्छ । जब व्यक्ति प्राणमय कोषमा पुग्दछ, ऊ आफैमा सन्त कहलिन लायक बन्दछ । त्यसपछि ऊ वेद, पुराण, उपनिषद्, कुरान र बाइबललाई समानरूपले देख्न थाल्दछ । उसले त्यही कुरा रामायणमा पाउँदछ जुन कुरा उसले कुरानमा पाउँदछ । उसले सन्तमा त्यही कुरा देख्दछ जुन कुरा उसले एउटा डाकामा देख्दछ किनकि प्राणको स्थिति त सर्वत्र उस्तै छ । यस स्थितिमा ऊ जुनसुकै घटनाको पनि साक्षीभूत बन्न थाल्दछ किनकि प्राण त भित्रबाट निस्कने त्यो तरङ्ग हो जुन पूरा ब्रह्माण्डमा फैलिएको छ । त्यसैले ऊ आँखा बन्द गरेर पनि ब्रह्माण्डमा घटिरहेका घटनाहरूलाई चुपचाप हेरिरहन्छ, उसबाट केही पनि लुक्दैन । कुनै व्यक्तिलाई देख्नेबित्तिकै उसका पहिलेका जीवनहरू उसको अगाडि स्पष्ट हुन थाल्दछन् र त्यही क्षणमा नै अमेरिकामा के भइरहेको छ भन्ने कुरा उसको अगाडि साकार हुन्छ किनकि प्राण त सर्वत्र व्याप्त छ ।

प्राणको कुनै भेद हुँदैन, प्राण त त्यो तरंग हो जसले

समयको एक सेकेन्डको हजार भागमा पूरा पृथ्वीको पच्चीस चक्कर लगाउँछ । त्यसैले केही पनि कुनै पनि घटित घटनाहरू उसका आँखा सामु साकार हुन्छन्, ठीक त्यसै प्रकारले जसरी टेलिभिजनको पर्दामा हामी दृश्यहरू देख्दछौँ ।

प्राणगत अवस्थामा पुगेको व्यक्ति कालातीत हुन्छ, ऊ कालभन्दा पर हुन्छ । हाम्रो वर्तमान जीवन र पूर्वजीवनबीच प्रभुले पर्दा राखिदिनुभएको छ जसले गर्दा हामीलाई हाम्रो पूर्वजीवनको स्मरण छैन । तर जब व्यक्ति प्राणमय अवस्थामा पुग्दछ, त्यो पर्दा हट्दछ र उसले पूर्वजीवनलाई स्पष्टरूपमा देख्न थाल्दछ । म को हुँ, म के थिएँ, म कहाँ थिएँ आदि कुरा उसले स्वत: नै थाहा पाउँदछ र यस्तै कुराहरू उसले अन्य व्यक्तिका बारेमा पनि थाहा पाउँदछ । त्यस्तै, उसले भावी जीवनहरू पनि देख्न सक्दछ ।

व्यक्तिले पूर्व र भावी जीवनहरू देख्न सम्भव हुन्छ किनकि उसले समग्र काललाई एकैसाथ देख्दछ । काललाई उसले विभक्तरूपमा देख्दैन । यो सबै प्राणगत अवस्थामा पुगेपछि मात्र सम्भव हुन्छ । यसर्थ, प्राणगत अवस्थामा पुगेको व्यक्ति एउटा उच्चकोटिको परमहंस अवस्था प्राप्त व्यक्ति कहलिन्छ, एउटा सन्त कहलिन्छ, तपस्वी, जीवनमुक्त कहलिन्छ किनकि त्यहाँ जीवको स्थिति हुँदैन, प्राणको अवस्थिति हुन्छ ।

प्राणगत अवस्था जीवनको उच्चतम र श्रेष्ठतम अवस्था हो । यस अवस्थामा भोक, प्यास, निद्रा, सुख, दु:ख, विलाप आदिले कुनै महत्त्व राख्दैन । उसले समस्त संसारलाई निर्विकार भावले देख्दछ । कहाँ के भइरहेछ, किन भइरहेछ, उसले बुझ्दछ । उसको प्राण समयको हजार भागमा अमेरिका, भियतनाम, अफ्रिका आदिमा पुग्दछ र त्यहाँका अनेकौँ दृश्यहरूलाई देख्न थाल्दछ । यो श्रेष्ठ स्थितिको प्राप्ति प्राणगत अवस्थामा पुगेपछि मात्र सम्भव हुन्छ ।

यसपछिको अवस्था निर्बीज अवस्था हो । निर्बीजको तात्पर्य हो– प्राणगत अवस्थाभन्दा पनि माथिल्लो स्थितिमा पुग्ने क्रिया किनकि प्राणगत अवस्थामा त विश्वब्रह्माण्डमा जुन घटना घटित हुन्छ, व्यक्ति त्यस घटनाको साक्षीभूत मात्र हुन्छ, द्रष्टा मात्र हुन्छ कि वर्तमानमा अफ्रिका, वाशिंगटन तथा न्यूयोर्कमा के भइरहेको छ... अथवा उसकी पत्नी के गरिरहेकी छिन्... । यी सबैलाई उसले त्यसैगरी देख्न सक्छ जसरी आफ्ना वरिपरिका वस्तुहरूलाई देख्दछ । तर निर्बीजावस्थामा पुगेको व्यक्तिलाई त्यसप्रकारका घटना वा कार्यहरूमा हस्तक्षेप गर्ने समेत सामर्थ्य प्राप्त हुन्छ, गलत कार्य भइरहेको ठाउँमा सुधार गर्न सक्ने, हिंसा आदि आपराधिक क्रियाकलापलाई हटाउन सक्ने, आफ्नो मानसिक तरङ्गका माध्यमबाट ती सम्पूर्ण घटनाहरूलाई रोक्न सक्ने क्षमता उसलाई मिल्दछ । उसभित्र त्यो स्थिति उत्पन्न हुन्छ जसबाट उसले एउटा हिंस्रक पुरुषलाई पनि अहिंस्रक बनाउन सक्दछ, उसले सर्पको विषलाई पनि अमृतमय बनाइदिन सक्दछ, उन्मत्त साँढेलाई पनि शान्त र सरल बनाइदिन्छ, सिँहजस्तो आक्रमणकारी जनावरलाई पनि पूर्ण सदाचारी बनाइदिन्छ र हरपल युद्धका लागि उत्प्रेरित भइरहने योद्धाहरूलाई पनि शान्त एवं सरल चित्तयुक्त बनाइदिन सक्दछ ।

व्यक्तिलाई प्रकृतिमा हस्तक्षेप गर्न सक्ने क्षमता प्राप्त हुन थाल्छ र उसले मनुष्यका विचार प्रवाहमा हस्तक्षेप गरी उसभित्रको विष, विषाक्तता र हिंस्रक प्रवृत्ति हटाउन सक्दछ । यस्तो व्यक्ति आफू अगाडिको व्यक्तिभित्रबाट काम र क्रोधको भावना हटाउन सक्षम हुन्छ जसले गर्दा बलात्कार तथा हिंसाका घटनाहरूमा रोक लाग्न सक्छ । साथै लोभजस्तो पाशविक प्रवृत्ति, जसको कारणले अनेकौँ हत्या भइरहेका छन्, यस्ता प्रवृतिलाई मान्छेभित्रैबाट हटाउने मानव मनभित्रका दुष्प्रवृत्तिहरूलाई नष्ट गरी ठीक र राम्रो चिन्तन दिई हिंस्रकपनाबाट हटाउँदै अहिंस्रक बनाएर उसबाट रचनात्मक काम लिन सक्ने क्षमता

व्यक्तिलाई प्राप्त हुन्छ ।

एउटा हिंस्रक व्यक्तिले छुरीले कसैलाई घाइते बनाउन सक्छ । यदि निर्बीज अवस्था प्राप्त व्यक्तित्वले उसको त्यस भावनालाई हटाउँदै उसको हातमा पेन्सिल र कागज दिन्छ भने उसले एउटा राम्रो चित्र पनि बनाउन सक्दछ...। उसमा हिंसात्मक प्रवृत्ति थियो तर त्यही हिंसात्मक प्रवृत्ति नै पेन्सिलको माध्यमबाट एउटा राम्रो चित्रकारितामा परिवर्तित हुन पुग्यो... पूरै रूपान्तरण नै भइदियो... प्रवृत्ति त रह्यो तर प्रवृत्तिको रूपान्तरण गरिदियो, निर्बीजसम्पन्न व्यक्तित्वले ।

यो उच्चतम अवस्था हो, श्रेष्ठतम अवस्था हो, महत्त्वपूर्ण अवस्था हो किनकि यस्तै व्यक्तिले गुरु बन्ने सामर्थ्य राख्दछ, यहाँनेर सद्गुरु बन्ने प्रक्रिया प्रारम्भ हुन्छ ।

यसभन्दा पहिलेको जुन अवस्था थियो, त्यो केवल 'गुरु'को अवस्था थियो, तर यहाँनेर ऊ एउटा सद्गुरु बन्दछ किनकि उसभित्र यही भावना रहन्छ– 'म आफ्ना शिष्यहरूको काम, क्रोधको प्रवृत्तिलाई रूपान्तरित गरूँ, त्यसलाई एउटा नयाँ स्वरूप दिऊँ, नयाँ चिन्तन दिऊँ, एउटा नयाँ धारणा दिऊँ ।'

यसपछिको अवस्था **मनस अवस्था** हो । यस अवस्थामा सम्पूर्ण रूपबाट मनलाई आफूमा लीन गर्ने प्रवृत्ति हुन्छ । यस स्थानमा पूर्ण समाधि, पूर्ण निश्चिन्तता प्राप्त गर्ने अवस्था हुन्छ । अब उसको मनमा कुनै भावना रहँदैन किनकि मन उसको नियन्त्रणमा हुन्छ । अब मनले उसलाई नचाउन सक्दैन बरु उसले मनलाई नचाउन सक्छ । सातौँ तहमा जब उसले स्पर्श गर्छ तब पूर्ण ध्यान अवस्था हुन्छ जहाँ आफ्नो कुनै होश हुँदैन, होशमा रहेर पनि होशमा हुँदैन, होशमा नरहेर पनि होशमा हुन्छ, जाग्रत र चैतन्य हुँदै पूर्णता प्राप्त हुन्छ । उसको मनमा काम, क्रोध, लोभ, मोह हुँदैन, उसभित्र कुनै पनि प्रकारको प्रवृत्ति हुँदैन । ऊ त तटस्थ भावले यस संसारमा रहँदै सबै कार्य गर्दै रहन्छ । मन पूर्णरूपले उसको नियन्त्रणमा हुन्छ, आफ्नो मात्र होइन आफू अगाडिको व्यक्ति, शिष्य वा मनुष्य जो भए पनि त्यसको मनमा पनि उसले नियन्त्रण प्राप्त गर्न सक्दछ । मनलाई रूपान्तरित गरेर एउटा डाकालाई वाल्मीकि बनाउन सकिन्छ... उसलाई उच्चतामा पुऱ्याउन सकिन्छ । त्यस स्थानमा, त्यस गहिराइमा जाने क्रियालाई ध्यान भनिन्छ । जब मनुष्य त्यस स्थानमा पुग्दछ, चाहे उसका आँखा बन्द हुन् त्यतिखेर पनि ऊ ध्यानावस्थामा हुन्छ र चाहे उसका आँखा खुला हुन् त्यतिबेला पनि ऊ ध्यानावस्थामै हुन्छ । क्रमश:

जय गुरुदेव !

# ध्यान! ध्यान!! ध्यान!!!

**तान्त्रिक ध्यानका प्रथम चरण, दोस्रो चरण, तेस्रो चरणका कक्षाहरू धमाधम सञ्चालन भइरहेका छन् । आजै नाम लेखाई आफ्नो स्थान सुरक्षित राख्नुहोला ।**

प्रथम चरण– **गोरक्ष निखिल वाणी पत्रिकाका सम्पूर्ण सदस्यहरुका लागि खुला ।** दोस्रो चरण– **प्रथम चरणको ध्यान सम्पन्न गरिसक्ने साधक साधिकाहरुका लागि ।** तेस्रो चरण– **दोस्रो चरणको ध्यान सम्पन्न गरिसक्ने साधक साधिकाहरुका लागि ।**

**बाँकी कुरा आश्रमको केन्द्रीय कार्यालय वा सम्पर्क कार्यालयहरुमा आएर बुझ्न सक्नुहुनेछ ।**

**हाल ध्यान सञ्चालन भइरहेका र निकट भविष्यमा हुने स्थानहरू–**

केन्द्रीय कार्यालय बसुन्धरा, सम्पर्क कार्यालयहरु भक्तपुर (कटुन्जे), ललितपुर (लगनखेल), काभ्रे (बनेपा), कास्की (पोखरा रामघाट, विन्ध्यवासिनी, लेखनाथ बडहरे), गोरखा (गोरखा बजार, लक्ष्मीबजार), सिन्धुपाल्चोक (बाह्रबिसे), तनहुँ ।

# पाँचौटा चाहिने कुराहरू

– महाकवि लक्ष्मीप्रसाद देवकोटा

दुनियाँमा पाचौटा चाहिने कुराहरू छन्–ईश्वर, आत्मा, स्वर्ग, नरक, धर्म ।

ईश्वरविना संसार नै शून्य छ । कारण नभई कार्य हुँदैन । हामी 'उनी छन्' को विश्वासमा जीवन धारण गर्दछौं । यत्रो विश्वको काँट र अडान देख्तादेख्तै यसमा चैतन्ययुक्त महापुरुषको सत्ता देखिँदैन भन्नु अन्धोपन हो । यो अनन्ततामा एक ठाउँ खडबड परे कत्रो विप्लव मच्चिन्छ, तर अणुअणु संगत भएका छन्, ताराको त्यत्रो जगड्वाल चाल छ, तर टक्कर छैन, समय र देशमा अभिप्रायपूर्वकका व्यापार देखिन्छन्, सूर्यचन्द्र नीतिको उचित कालीनतासँग काम गर्दछन् । रुखहरूलाई बीउभित्र हालिदिएको छ, बीउहरूलाई रुखभित्र । दानामा विश्व छ र विश्वमा दाना छ । यो मिलाप, यो तराजु, यो रौंप्रमाण तौल, यी चक्रहरू, यी उचित कालीनताका क्रमहरू सबै भन्दछन्– दिव्य चैतन्य भन्ने कल्पना होइन तर संसारको सत्य हो ।

चित्, संगति, साम्य अभिप्राय–यिनीहरूबाट हामी ईश्वरको सत्ता मान्दछौं । जडबाट चैतन्य आउँदैन भने यो चैतन्यको मुहान कहीं हुनुपर्छ । त्यो विराट् चैतन्यलाई परब्रह्म भन्दछन्–त्यस अवस्थामा जब विश्वसृष्टि हुन बाँकी नै थियो, जब इन्द्रियहरूको प्रादुर्भाव भएको थिएन उनी व्याप्त थिए, विशिष्ट भएका थिएनन् । जब प्रथम कामको स्फुरणसाथ उनी सिर्जना आभासित गर्न लागे, अनि उनको स्वरूप व्यक्त हुँदा स्रष्टाको प्रादुर्भाव भयो । त्यस अवस्थामा मूर्त भएका विश्वस्रष्टा हाम्रा ईश्वर हुन् ।

ईश्वरसत्ताका प्रमाणहरू धेरै हुँदाहुन्, तर म न दार्शनिक हुँ, न वेदान्ती । म आफैं सहज बुद्धिले फेला परेका कुराहरू बहस गर्दछु ।

चित्, संगति, अभिप्रायको प्रमाण पहिले नै झल्काइसकियो । कार्यरूप विश्व भए पछि कारणरूप कर्ता सजिलो न्यायबाट निस्कन्छ । वैज्ञानिकहरू अन्धो काकताली सम्झेर प्रकृतिलाई देखाउँछन् तर विश्वमा अन्धता छैन । त्यहाँ अराजकता देखिन्न । रुखका जरामा पनि दिव्य अभिप्रायको अदृश्य औंला काम गरिरहेको जस्तो देखिन्छ । जडको शून्यताउपर केही अर्कै आभास स्थिति भइरहेछ, मिलाप दिइरहेछ, बनाइरहेछ, आकार मेटिरहेछ । ताराका रेखाहरूमा पनि दिव्य झल्किरहेकै छ । अनि तेस्रो कुरा हामी विरोधको द्वन्द्वमा साम्य पाइरहेछौं, मानौ ती दुवै विरोधी कुराहरू एकै सत्ताबाट क्रियात्मकरूपमा आभासित छन् । चौथो चीज यो हो कि–जडमा स्वत:क्रिया हुँदैन, क्रिया गर्ने कर्ता सहजसँग प्रमाणित हुन्छ । पाचौं कुरा–हामी संसारमा दिव्य नीतिको संकेत पाइरहेछौं, यहाँ द्वन्द्वको ऐक्यमा नै शान्ति र सत्य भेट्टाइन्छ । दु:खहरूमा परमेश्वर सम्झाउने र सत्य संकेतक अभिप्राय स्पष्टीकृत छ र हामी असत्यको राहले शान्ति पाउँदैनौ । सौन्दर्य सत्यबाट झल्कन्छ र चराहरूको मधुरता परमात्माहरूको आनन्दको लागि पाइएको जस्तो बुझिन्छ । माधुर्य परप्रेममा आभासित हुन्छ र विश्वोपयोगितामा चीजहरूले सौन्दर्य लिएजस्तो प्रतीत हुन्छ । तब स्पष्ट हुनजान्छ कि–चराचरमा दिव्य नीतिकै शासन रहेछ । छैटौं कुरा–ईश्वरीय चेत नभई मानवमन प्रकृत विकास पाउन सक्तैन, गडबडिन्छ । कट्टर नैतिक पनि टूटफूटको अँधेरीमा पर्दछ । सब तार सुरमा मिल्दैनन् । नास्तिकापत्तिहरूद्वारा संघर्षण र विश्वस्थितिमा गडबडीहरूका प्रणाशक उपाधिहरू उत्पन्न हुन्छन् । सातौं कुरा–परमेश्वरमा विश्वास नगरी कुनै आत्माले संसार छाड्न सक्तैन । यो सबै मनुष्यजातिको त्यस बेलाको अनुभवमा म निर्धारित राख्दछु, जब यिनीहरूको प्राण गलामा आइपुगेको हुन्छ । हाम्रो मरणासन्न प्रकृत आध्यात्मिक ध्वनि 'हे ईश्वर !' को पुकारसँग जीवन समर्पण गर्छ । सार्वजनिक यस प्रवृत्तिले हामी ईश्वरको सत्ता आखिरमा स्वीकार नगरी सक्तैनौं । आठौं प्रमाण–हामी प्रेमको आभासमा पाउँछौं । सिर्जनाको दिव्य अभिप्राय प्रेममा उत्पन्न भएजस्तो देखिन्छ, यो प्रेम अरु ठाउँ अनन्त करुणाको रूपमा देखा पर्दछ । जीवनलाई सच्चा आनन्द दिन सूचना भएका सामग्रीहरू झैं संसारमा सब चीजहरू आभासित भएझैं लाग्छ । तिनमा उपभोगहरूबाट पाइने आनन्दउपर एउटा यस्तो राम्रो दिव्य प्रेमको तत्व झल्किन्छ कि त्यसबाट ईश्वरको सहानुभौतिक सादृश्य (मनुष्यको रूपनजीकको) स्पष्ट भएर आउँछ किनकि उनी हामीलाई आफूबाट टाढा जान दिन चाहन्नन् र टाढा जाने क्रियामा दु:ख र अग्नि हालेर हामीलाई वैराग्यमा रुलाउँदै आफ्नोतर्फ ल्याउँछन् । हाम्रो जीवन र आनन्दोपभोगिता त्यही प्रेम तत्वमा निर्भर भएको प्रतीत हुन्छ । त्यस प्रेमीको व्यक्तीकरण भावना गर्न बहुत सजिलो

पर्दछ मानव आत्मालाई । नवम प्रमाण–विश्वको अनन्त तारुण्य र यसमा रहने अमृतभावमा देखिन्छ । आत्मा अमर छ भन्ने हाम्रो विश्वास छ, भूतप्रेतादिहरूद्वारा यो कुरा सिद्ध गर्न सकिन्छ । त्यसका साथसाथै कोही अमृततत्व विश्वलाई परिवर्तनशीलताउपर पनि अमर पोषण दिएर नित्य तारुण्यमा राखीराखी मानवात्मालाई चाहिँदो सामयिक पोषण दिन्छन् । दशौँ प्रमाण– मानवात्माको प्रत्येक विचार मात्रको अनन्त उत्तरदायित्वमा पाइन्छ । यो अदृष्यको पर्दाको आड लिएर जवाफ लिने हामीसँग हरेक सूक्ष्म भावानुभावमा घनिष्ठ व्यक्तीकरण पाएको विराट् मूर्ति जस्तो लाग्छ । मनुष्यमा अपूर्णताको चैतन्य रहनु नै पूर्ण चैतन्यको संकेततत्वको रूपमा एघारौँ प्रमाण रहन्छ । यी केही प्रमाण हुन् र यिनबाट त्यो कोही एक विश्वस्रष्टा रहेछ भन्ने थाहा पाइन्छ । तर हामी बोक्रे वेदान्तीको काल्पनिक शून्यप्राय: चैतन्यमा निर्धारित हुन चाहँदैनौँ । हामी मूर्तिमान् घनिष्ठता चाहन्छौँ । हामी सजीवता भएका ईश्वरका प्रमाण चाहन्छौँ । मूर्तिमत्तालाई टाढा जानु पर्दैन । जुन विराट् चैतन्यले शून्यबाट विश्वलाई मूर्त बनायो, स्वयं त्यही आकृति हुनु सम्भव मात्र होइन, चित्र हुन सजिलो छ । मायाको सबल स्वरूपसम्म हाम्रो कल्पना पुग्दछ । परमेश्वर ढुङ्गा जस्ता छैनन्, तर सजीव सहृदय छन्, यद्यपि उनका हृदयमा अनन्त करुणाका अनन्त कठोरता क्रिया गर्दछन्– सत् शिव सुन्दरका सभामा ।

जहाँ यी पूर्णाभासी ईश्वर रहन्छन् त्यो ठाउँ कस्तो होला ? त्यही स्वर्ग हो, त्यहाँ निर्मल आत्माहरू सान्निध्यमा बास पाउँछन् ।

त्यहाँ अमृत छ, दु:खको अभाव ! मूर्तिमत्ता भएपछि स्वर्ग छैन भन्नु अन्धता र अविवेक हुन्छ । मूर्ति भएपछि स्थान हुन्छ, ईश्वरको स्थान स्वर्ग या वैकुण्ठ हो ।

मनुष्यमा आत्मा छ भन्ने सजिलो विश्वास छ । रासायनिक संमिश्रणहरूको काकतालीी क्रियाले मानव सन्तुष्ट हुँदैन । मनुष्य अभिप्रायसंपन्न छ । मृत्युभन्दा पारिका कुराहरू हामी थाहा पाउन सक्छौँ । भूतहरू, भूतविद्याहरूद्वारा मनुष्यको जवाफदेही अनन्त छ भन्ने कुराको उल्लेख भइसक्यो । अमरत्व देखेपछि भौतिक या शारीरिक अस्तित्वभित्र आध्यात्मिक व्यक्तता रहेछ भन्ने स्पष्टै छ, देखादेखी छ । तब आत्माका अस्तित्वको विषयमा झगडा धेरै हुँदैन । जडले मलाई लेखाउँदैन, चित्को क्रियाले लेखाउँछ, चित्को आश्रम जो म छु, त्यसमा मूर्तिमत्ता र परलोकभागिता स्पष्टै छँदैछ ।

यो अमर आत्मा न पोलिन्छ, न भिज्दछ । स्वर्ग चाहन्छ, नरकदेखि डराउँछ । परमेश्वरका मुहानबाट शक्ति पाएर काम गर्छ । अलग व्यक्तित्व राख्दछ, सत्यमा शान्ति पाउँछ, असत्यमा परमेश्वर र शान्तिबाट टाढा पुग्दछ । पापले उसलाई अन्तर्ज्वलन दिन्छ । उसका निमित्त पाप भनेको अन्त:करणमा सुनिने भित्री ईश्वरका आवाजको विरोध र सत्यको अवहेलन हो । यो जीवात्मा परमेश्वरको हुकुमले यहाँ आउँछ, केही समय सजीव क्रियामा रहन्छ र ईश्वरेच्छाले संसार त्याग गरेर आफ्नो स्थान लिन जान्छ । उसको जवाफदेही अनन्त छ, उसका भाव र विचारहरू सब उत्तरदायित्व भावी फल धारण गर्दछन् र ऊ ईश्वर नसम्झी संसार त्याग गर्न सक्तैन ।

यो आत्मा निर्मल भावले दिव्याभिप्रायको पूर्ण पोषण गरेपछि स्वर्ग जान्छ, नत्र पापहरूको मैला भारी बोकेर नरक जान्छ । व्यक्ति भएपछि स्थान हुनुपर्छ भन्ने स्वयं सिद्ध तत्वद्वारा नरक पनि सिद्ध छ ।

अरु पाँचौं कुरा धर्म हो । धर्म भनेको धारण गर्नुलाई भनिन्छ । जसले मानवजातिको कल्याण र विश्वको सत्यमा धारण गर्दछ, त्यसलाई धर्म भनिन्छ ।

धर्म कोही जातिलाई बताएथे । कुनैलाई वैकासिक क्रमहरूद्वारा ऋषि, साधु, सन्तहरूबाट मिल्छ । तर प्राथमिक अवस्थामा धर्मको मूल प्राप्तिमा ईश्वरवाणी नभई धर्म निक्लँदैन । कुनै सच्चा आत्मालाई दिव्यको जादुले छुन्छ, ऊ मुखरित हुन्छ–जातिको अनन्त कल्याण, सुख र स्वर्गको लागि । ईश्वरवाणी ह्वैन भन्ने वैज्ञानिक शङ्काधारीहरू भूल गर्दछन्, किनकि असत्य दुनियाँका हृदयमा थोरै समय राज गर्न सकोस् तापनि नित्य शासन गर्न सक्तैन र सत्यका ती चमत्कारी ध्वनिहरूमा वाणी सजिलैसँग चिनिन्छ । त्यहाँ ईश्वरीय चमत्कार छ । म सानो झुत्रेमुत्रे कविता सामयिक हृदयस्पर्शितासाथ निकाल्न कति कठिनता र कति अनन्त सूक्ष्मताहरूको क्रिया अनुभव गर्दछु, तर त्यो बनाएर बन्दैन । सत्यको खोलो छ, हरेक अणुमा काँट र तौल छ, तर दिव्यताको ।

तब धर्मको जरुरत मानवसुखको लागि, परमार्थको लागि हो, स्वर्गको राहको लागि हो । धर्म नभए मानिस अन्धो हुन्छ । अनन्त भूलभुलैयामा धागो पाउँदैन र जातिको सत्यानाश सम्भावित हुन जान्छ ।

तर यी पाँच कुरा जहाँ छन्, त्यहाँ अनन्त जीवन र अनन्त शक्ति, स्वर्गको बाटो र उन्नति रहन्छन् । ईश्वरविना ऐंडी हुँदैन, आत्माविना माटो हुन्छ, किरण हुँदैन, जवाफदेही हुँदैन । नरकविना त्रास हुँदैन र धर्मविना बाटो हुँदैन ।

*(लक्ष्मी निबन्ध–संग्रहबाट)*

# महामाया शाकम्भरी

सत्ययुगको समय थियो । स्वभावले नै मानिसहरू कामनारहित थिए । मनुष्यको अन्त:करण कामना-कलुषित भएको थिएन न त रजोगुण तथा तमोगुणको संघर्षले नै उसलाई क्षुब्ध गर्न सक्दथ्यो । निसर्गपवित्र मानव– एकाक्षर प्रणव नै पर्याप्त थियो उसको लागि । त्रयीको कर्म विस्तार न आवश्यक थियो न त शक्य नै किनकि मनुष्यले यज्ञको लागि पनि संग्रह गर्न त्यसबेलासम्म सिकेको थिएन । ऊ त सहज अपरिग्रही थियो ।

'मनुष्य जब यज्ञ गर्दैन, हामीलाई यज्ञभाग दिँदैन भने हामी पनि वृष्टि व्यवस्थाको दु:ख किन गर्ने ?' देवराजको मनमा ईर्ष्या जाग्रत् भयो- 'सृष्टिका विधायकले त नियम बनाएका छन् कि मानिसहरू यज्ञ गरेर हामीलाई यज्ञभागबाट पोषित गरून् र हामी सुवृष्टिद्वारा अन्नोत्पादन गरेर उनीहरूलाई भोजन दिऔँ । परस्पर सहायताको यो नियम मानवले प्रारम्भमा नै भङ्ग गरिदियो । जब हामीलाई मनुका सन्तानहरूले गन्दैनन् भने उनीहरूसँग हामी पनि सम्बन्ध राख्दैनौँ ।'

देवराज असन्तुष्ट भए र बादल आकाशबाट लुप्त भयो । धराको प्राणलाई गगनले सिँचित गर्दैन भने अंकुरहरूको उदय तथा बिरुवाहरूको पोषण कहाँबाट हुन्छ ? तृणहरू सुके, लताहरू सुकेको काठमा बदलिए, वृक्षहरू ओइलाए । घोर दुष्काल आयो । प्राणधारीका लागि अन्न, फल, शाक, तृण आदि साधनहरू बाँकी रहेनन् धरतीमा ।

तबसम्म मनुका निष्पाप संतान मानवमा चिन्ता र कामना कहाँ आएको थियो र ? उसलाई ध्यान र तप प्रिय लाग्दथ्यो । निष्पत्र, शुष्कप्राय वनमा मानवले जहाँ सुविधा मिल्यो त्यही आसन लगाएर बस्यो । उसलाई न चिन्ता थियो न त क्लेश नै । उसले आनन्दपूर्वक भन्यो–'परमात्माले तपस्या गर्ने वातावरण दिनुभएको छ । धरतीको पुण्योदय भयो ।'

जहीँ तहीँ मानिसहरू आसन लगाएर आँखा बन्द गरेर बसेका थिए । सत्ययुगको दीर्घायु, सात्त्विकता र सहज सत्त्व मानव समाधिमा मग्न भयो भने देवराजको युगौँ व्याप्त अकालले उसलाई के गर्न सक्छ ? उसले अधर्म गरेको छैन, अपराध गरेको छैन भने ऊ किन भोकै रहनु ? किन जबरजस्ती तप गर्नु ?

इन्द्र प्रमत्त भए कर्तव्य पालनमा, तर आफ्ना संतानको पालनका लागि विश्व संचालिका महाशक्ति जगज्जननी प्रमत्त हुन सकिनन् । सबैदिशाहरू आलोकले पूर्ण भए । मानवहरू आफ्नो आसनबाट आतुरतापूर्वक उठे र दुवै हात जोडेर शिर झुकाए । आकाशमा सिंहस्थिता, रक्तवर्णा, शूल, पाश, कपाल, चाप, वज्र, बाण, अंकुश, मुसल, शंख, चक्र, गदा, सर्प, खड्ग, अभय, खट्वांग एवं दण्डहस्ता, दशभुजा महामाया आदिशक्ति शाकम्भरी प्रकट हुनुभएको थियो ।

धरतीमा वर्षा भइरहेको थियो तर मेघबाट जलको वर्षा होइन, महाशक्तिको श्रीअंगबाट अन्न, फल, शाक आदिको वर्षा । पृथ्वीका प्राणीहरूको क्षुधा कति हुन्छ र ? जब महामायाले दिन थाल्नुभयो भने प्राणीले कति लिन सक्छ र ? एक दिन, दुई दिन होइन, वर्षौंसम्म यो वर्षा भइरह्यो । देवराज डराए । यदि महामायाले यसै प्रकार अन्न, शाक आदिको वर्षा गरिरहन्छिन् भने उनको इन्द्रत्व त समाप्त भयो । पृथ्वीका लागि उनका बादलहरूको के आवश्यकता ? यस तरीकाले मानिसले देवतालाई कहिल्यै यज्ञभाग देलान् भन्ने के सम्भावना रह्यो र ? यस्तै रह्यो भने देवलोकमा भोकमरी आउन कति दिन लाग्ला र ? देवराजले जगद्धात्रीसँग क्षमा मागे र आकाश बादलले ढाकियो । जय गुरुदेव !

*(कल्याण सत्कथांकबाट)*

# अन्नपूर्ण

*('हिमालय के योगियों की गुप्त सिद्धियाँ' पुस्तकमा सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूका एक शिष्यले उल्लेख गर्नुभएको प्रसंग पाठकवर्गसमक्ष प्रस्तुत गरेका छौं ।)*

कन्याकुमारीबाट हामी महाबलिपुरम् आयौं । समुद्रको किनारमा रहेको यो स्थान हामीलाई अत्यन्त नै रमणीय र आनन्दप्रद लाग्यो । परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) ले यस स्थानको पौराणिक स्थितिको बारेमा धेरै कुरा भन्नुभयो । उहाँले भन्नुभयो कि भगवान् शिवले यहाँ तपस्या गरेर देवी अन्नपूर्णालाई आफ्नो शरीरमा समाहित गर्नुभएको थियो ।

अन्नपूर्णा साधनाको लागि यो उपयुक्त स्थान हो । म ती दिनहरूको एउटा घटना उल्लेख गर्न लागिरहेको छु जुन मेरो डायरीमा अंकित छ ।

यहाँ हरिओम बाबा लगभग आठ-दश वर्षदेखि बस्दै आउनुभएको थियो । बाबाजी पनि गुरुदेवको नै शिष्य हुनुहुन्छ र गुरुदेवको आज्ञाले नै उहाँले यस स्थानलाई आफ्नो निवास बनाउनुभएको थियो । उहाँले धेरै प्रयत्न गरेर यहाँ आफ्नो आश्रम मात्र बनाउनुभएन, एक वैदिक विद्यालयको पनि स्थापना गर्नुभयो जसको खर्च आश्रमले नै व्यहोर्दथ्यो । यसबाहेक उहाँले गौशाला, दृष्टिविहीनका लागि बेग्लै विद्यालय तथा स्त्रीहरूको शिक्षाको लागि पनि विद्यालय बनाउनुभएको थियो । जब हामी त्यहाँ गयौं उहाँको कार्य देखेर सद्गुरुदेव अत्यन्त प्रसन्न हुनुभयो । समाजको उन्नति प्रगतिका लागि उहाँले जे गर्नुभयो त्यो वास्तवमा नै सराहनीय थियो ।

हामी त्यहाँ २-३ दिन रहयौं। यस अवधिमा मैले अनुभव गरें कि स्वामीजीले विशिष्ट अन्नपूर्णा साधना सिद्ध गर्नुभएको छ । उहाँ केवल लगौंटी मात्र लगाएर बस्नुहुन्थ्यो र मानिसहरूसँग भेटघाट गर्दा कम्मरमा एउटा गम्छा बेर्नुहुन्थ्यो । उहाँको साथमा आठ इन्च लामो र आठ इन्च चौडा एउटा रातो रंगको झोला झुण्डिएको हुन्थ्यो । यहाँ नित्य भण्डारा हुन्थ्यो तथा बेलुकी जो अतिथि यहाँ आउँथे उनीहरूलाई प्रेमपूर्वक भोजनादि गराइन्थ्यो । नित्य लगभग एक-डेढ सय साधु, संन्यासी, अतिथिहरू आउँथे र सबै तृप्त भएर फर्कन्थे ।

एकदिन दिउँसो हामी सबै गुरुदाइ गुरुभाइहरू हरिओम बाबाको साथमा समुद्रको किनारमा बसेर वार्तालापमा मग्न थियौं । केही बेरमा गुरुदेव पनि त्यहाँ आउनुभयो र हरिओम बाबाको कार्यको सम्बन्धमा कुराकानी शुरु भयो । बाबाले भन्नुभयो-'गुरुदेव ! म केही समय हजूरको साथमा रहन चाहन्छु। अब त यहाँको कार्य जुनसुकै गुरुभाइले पनि सम्हाल्न सक्छन् ।' गुरुदेवले भन्नुभयो- 'साधनाको एउटा उद्देश्य समाजसेवा पनि हो र जबसम्म समाजसँग साधना जोडिँदैन तबसम्म साधनाको कुनै मूल्य नै हुँदैन । तिमीले यहाँ रहेर यी अशिक्षित मानिसहरूको माझमा जुन कार्य गरेका छौ त्यो वास्तवमा नै सराहनीय छ । तिमीले अझै केही समय यहाँ रहनुपर्दछ। मैले देखिरहेको छु यस ठाउँमा अन्धोपनाको प्रकोप

धेरै छ । यहाँ पाइने जडिबुटिहरू म तिमीलाई चिनाइदिन्छु । यसको प्रयोगबाट आँखासँग सम्बन्धित फुलो, रतन्धो आदि रोगहरू समाप्त हुन्छन् ।' त्यसपछि गुरुदेवले समुद्रको किनारमा एउटा झाडीका केही पातहरू मगाउनुभयो जसलाई त्यहाँ अफनूरा भनिन्छ । यसको पातको रस (केही थोपा) दिनमा दुईपटक आँखामा हाल्नाले आँखाका सबै प्रकारका रोगहरू समाप्त हुन्छन् ।

हरिओम बाबाले अन्नपूर्णा साधना सिद्ध गर्नुभएको थियो । कुरैकुरामा गुरुदेवले सोध्नुभयो- 'तिम्री अन्नपूर्णा के गर्दैछिन् ?' हरिओम बाबाले उत्तर दिनुभयो- 'हजूरको नै कृपा हो ।'

'त्यसोभए हामीलाई पनि दर्शन गराइदेऊ न त' गुरुदेवले हाँस्दै भन्नुभयो ।

तब हरिओम बाबाले नजिकैको एरबंगको बोटका ठूला ठूला पातहरू ल्याउनुभयो । यो आठ दश फिट अग्लो हुन्छ । यसको पातको लम्बाइ चौडाइ केराको जस्तै हुन्छ । यहाँका मानिसहरू यी पातहरूमा भोजन गर्ने गर्दछन् ।

लगभग पाँच बजेको थियो । बाबाले पहिले हामी सबैको अगाडि ती पातहरू राख्नुभयो । अनि फेरि आफ्नो साथमा झुण्डिएको रातो झोलाबाट निकाल्दै विविध प्रकारका खाद्य पदार्थ ती पातहरूमा पस्कन थाल्नुभयो । त्यो झोलाको लम्बाइ चौडाइ मात्र आठ इन्च थियो तर त्यसबाट उहाँले लड्डु, पेडा, बर्फी, हलुवा तथा अन्य धेरै प्रकारका खानेकुराहरू निकाल्दै जानुभयो । उहाँ आफ्नो हात त्यस झोलामा हाल्नुहुन्थ्यो अनि निकालेर पस्कँदै जानुहुन्थ्यो । यति मात्र होइन अपितु विविध प्रकारका साग सब्जीहरू पनि त्यसै झोलाबाट निकालेर हाम्रो अगाडि बिछ्याइएका पातहरूमा पस्कँदै जानुभयो । भोजनको साथमा त्यसै झोलाबाट गिलास पनि निकाल्नुभयो र चिसो पानी पनि त्यसै झोलाबाट निकाल्दै हामीलाई पिलाउँदै जानुभयो । हामी सबै गुरुभाइहरू त्यो झोला देखेर आश्चर्यमा पर्‍यौं जसबाट बाबाजीले आफ्नो मनोवांछित सामग्री निकाल्दै हामीलाई खुवाउँदै हुनुहुन्थ्यो । त्यस दिन गुरुदेवले पनि थोरै आतिथ्य स्वीकार गर्नुभयो ।

परमपूज्य सद्गुरूदेव डा. नारायणदत्त श्रीमालीज्यू

त्यसदिन हामीले जे देख्यौं त्यो आश्चर्यजनक थियो । दोस्रो दिन एकान्तमा मैले यस साधनाको रहस्यको बारेमा जानकारी लिन खोजें, उहाँले भन्नुभयो कि गुरुदेवको आदेशबिना उहाँ केही पनि बताउन असमर्थ हुनुहुन्छ ।

तेस्रो दिन मौका पारेर हामीले गुरुदेवसँग अन्नपूर्ण साधनाको बारेमा जान्न खोज्यौं तर उहाँले हाँसेर टारिदिनुभयो । त्यस घटनाको दुई वर्ष जति पछि मैले यो साधना परमपूज्य सद्गुरुदेवबाट सिक्ने सौभाग्य प्राप्त गरें र मैले अनुभव गरें कि वास्तवमै यो साधना स्वयंमा अत्यधिक महत्त्वपूर्ण छ ।

जय गुरुदेव !

*(परमपूज्य सद्गुरुदेव श्री शिव गोरक्ष सम्बन्धी विभिन्न सत्य तथ्य कुराहरूको बारेमा जानकारी दिने क्रममा श्री सावर संरचना शक्ति केन्द्र नेपालद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा लिखित 'श्री शिव गोरक्ष-नाथंप्रदाय' ग्रन्थबाट विभिन्न प्रसंगहरू क्रमश: प्रकाशित गर्दै गइरहेका छौं ।)*

# आदिनाथद्वारा पंथको उद्‌भव

माता पार्वतीले भगवान् शिवसँग सप्तशृङ्गमा महायोगको चर्चा गर्नुभएका एवं सोध्नुभएका प्रसङ्गहरू 'योगबीज'मा उल्लिखित छन् जसमा माता पार्वती भगवान् शिवलाई भन्नुहुन्छ–

**नमस्ते आदिनाथाय, विश्वनाथाय ते नमः ।**
**नमस्ते विश्वरूपाय, विश्वातीताय ते नमः ॥**

(योगबीजः १)

हे आदिनाथ, अलख-निरञ्जनस्वरूप परमेश्वर ! समस्त विश्वका पालक-विश्वनाथ ! हजूरलाई नमस्कार छ । हे विश्वका व्यापक विश्वरूप ! हजूरलाई नमस्कार छ । हे विश्वातीत अखण्ड परमात्मस्वरूप निराकार निर्विकार महेश्वर ! हजूरलाई मेरो नमस्कार छ ।

**नाना मार्गास्त्वया देव ! कथितास्तु महेश्वर ।**
**अधुना मोक्षदं मार्ग ब्रूहि योगविदांवर ॥**

(योगबीजः ५)

हे देव ! हजूरले अनेकौं मार्गका बारेमा वर्णन गर्नुभयो । अबका समयमा, हे योगज्ञानीहरूमा सर्वश्रेष्ठ महेश्वर ! हजूरले कृपा गरी भव दु:खसागरबाट पार पाउने, मोक्षदायक मार्गको बारेमा प्रवचन गरिदिनुहोस् ।

भगवान् शिवले पार्वतीको प्रश्नको उत्तर दिँदै भन्नुहुन्छ–

**सर्वसिद्धिकरो मार्गो माया जालनिकृन्तनः ।**
**जन्म मृत्युजराव्याधिनाशकः सुखदो भवेत् ॥**
**बहा येन विमुच्यन्ते नाथ मार्गतः परम ।**
**तमहं कथयिस्यामि तव प्रोत्या सुरेश्वरी ॥**

(योगबीजः ६-७)

समस्त योग सिद्धिहरू प्रदान गर्दै सांसारिक मायाजाल अविद्याको बन्धनबाट हटाइदिने, मोक्ष प्रदान गर्न सक्ने एक मात्र मार्ग नै सिद्ध मार्ग हो । यस जगत्का सारा प्राणीहरूलाई जन्म, मृत्यु एवं जरावस्थाबाट मुक्ति प्रदान गर्दै समस्त

शारीरिक र मानसिक रोगहरूलाई नष्ट गरी अत्यन्त सुख प्रदान गर्ने योगज्ञान नै सर्वश्रेष्ठ छ। हे देवताहरूकी अधीश्वरी पार्वती ! तिमीदेखि प्रसन्न भएको कारण म त्यस्तो मार्ग जुन सर्वसिद्धिदायक, मोक्षप्रद छ, त्यस नाथ मार्ग अर्थात् सिद्ध मार्गको चर्चा गर्दैछु जसको आशय ग्रहणबाट संसारका समस्त बन्धनमा ग्रस्त जीव मुक्ति प्राप्त गरी स्वस्थ हुन्छन्। यो नाथ मार्ग अत्यन्त श्रेयस्कर छ। अन्य मार्गहरूको आश्रय लिएर कैवल्यस्वरूप परमपद (स्वसंवेद्य पद) प्राप्ति हुँदैन, केवल सिद्धामृत मार्ग (नाथ मार्ग) बाट मात्र प्राप्त हुन्छ।

यसरी भगवान् शिवले माता पार्वतीलाई सिद्ध मार्ग अर्थात् नाथ मार्ग नै सबैभन्दा श्रेयस्कर मार्ग भनी वर्णन गर्नुभएको कुराको योगबीजमा उल्लेख पाइन्छ। भगवान् शिव नै आदिनाथ, विश्वनाथ आदि हुनुभएको र नाथ सम्प्रदाय ज्यादै पुरानो र भगवान् आदिनाथकृत भएको प्रसङ्गलाई प्रष्ट्याउनका लागि यी प्रसङ्गहरूको यहाँ चर्चा गरिएको हो। भगवान् शिवद्वारा माता पार्वतीलाई अति गोप्यरूपमा दिइएको योगमहाज्ञान अत्यन्त दुर्लभ थियो। यस्तो दिव्य महाज्ञान भगवान् शिवबाहेक अरूलाई थाहा नभएको तर भगवान् शिव गोरक्षले सम्पूर्ण महाज्ञानको बारेमा व्याख्या गर्नुभएको र उहाँद्वारा सम्पूर्णको लागि सर्वसुलभ बनाइएको पाइन्छ। त्यसैका प्रसङ्गहरूको योगबीजमा पनि उल्लेख पाइन्छ। यस प्रसङ्गले पनि भगवान् शिव गोरक्ष 'श्री श्री महायोगी गुरु गोरखनाथ' नै आदिनाथ हुनुभएकोमा दुई मत हुँदैन।

## आदिनाथद्वारा नवनाथको निर्माण प्रसंग

भगवान् आदिनाथले नवनाथको निर्माण गरी नाथ सम्प्रदायको शुरुआत गर्नुभयो। आफू मूलनाथ बनी अन्य नाथयोगीहरूको पनि निर्माण गरी नाथयोगीको रूपमा दीक्षा दिनुभयो। यसरी आदिनाथले बनाउनुभएको नवनाथको नामावली यसप्रकार रहेको छ–

१. **आदिनाथ (मूलनाथ)**
२. **उदयनाथ**
३. **सत्यनाथ**
४. **सन्तोषनाथ**
५. **अचल अचम्भेनाथ**
६. **गजबेली गजकन्थडनाथ**
७. **चौरंगीनाथ**
८. **मत्स्येन्द्रनाथ**
९. **शम्भुजति गुरु गोरक्षनाथ**

यसरी भगवान् आदिनाथले सृष्टि व्यवस्थालाई सुव्यवस्थित पाराबाट अगाडि बढाउन सृष्टिको लागि चाहिने शक्ति उत्पन्न गर्नको लागि आफूभित्रको सूक्ष्म रूपका पराशक्तिलाई आफूभन्दा बाहिर स्थूलरूपमा प्रकट गरी दोस्रो नाथको रूपमा माता पार्वतीलाई नै **उदयनाथ**को रूपमा विभूषित गर्नुभयो। नाथयोगीहरूले जब कुण्डलिनी जागरण गर्दछन्, तब मात्र उदयनाथजीको दिव्य दर्शन प्राप्त गर्दछन्।

यसरी नै नवनाथ सिद्धमा तेस्रो सिद्धयोगी **सत्यनाथ** ब्रह्माजीको स्वरूप अवतार मानिन्छ। आदिनाथको कृपाले कमलको फूलबाट ब्रह्माजीको प्रादुर्भाव भयो। उहाँले ब्रह्माजीलाई दीक्षा दिई सत्यनाथको रूपमा स्थापित गराउनुभयो।

नवनाथ सिद्धहरूमा चौथो सिद्धयोगी **सन्तोषनाथ**लाई महासिद्ध योगश्वर मानिन्छ। उहाँलाई भगवान् विष्णुको अंशरूप पनि मानिन्छ। भगवान् विष्णुले आदिनाथ भगवान्सँग दीक्षा लिनुभयो र नाथ बन्नुभयो।

नवनाथ सिद्धमा सिद्धयोगी **अचल अचम्भेनाथ**लाई पञ्चम सिद्धयोगी मानिन्छ। शेषस्वरूपी एवं वायु तत्त्वको रूप नै सिद्धनाथ अचल अचम्भेनाथ हुनुहुन्छ जो समस्त सृष्टिको आधार हुनुहुन्छ। शेष नागराजलाई आदिनाथले नाथरूपमा स्वीकार गरी पाताललोकको राजा बनाउनुभयो र 'सृष्टिलाई आफ्नो शिरमा धारण गरी सृष्टिलाई धान्नू, साथै सन्तोषनाथ विष्णुको आसन बन्नू' भन्ने वरदान दिनुभयो।

नवनाथ सिद्धहरूमा छैटौँ सिद्ध नाथको रूपमा **गजबेली गजकन्थडनाथ** हुनुहुन्छ। भगवान् श्रीगणेशको अवतारस्वरूपलाई भगवान् आदिनाथले नाथ नाम दिनुभयो।

पार्वती एवं भगवान् आदिनाथको संयुक्त रूपको शक्तिको कारण भगवान् गणेशलाई गजबेली गजकन्थडनाको रूपमा प्रतिष्ठित गराउनुभयो ।

नवनाथ सिद्धहरूमा सातौँ सिद्ध योगी **चौरंगीनाथ** अजर अमर कायायुक्त सिद्धनाथ योगेश्वर हुनुहुन्छ। चन्द्र देवताको स्वरूप नै सिद्ध योगी चौरंगीनाथ हुनुहुन्छ। आफ्नो शिरमा शोभायमान चन्द्रमाको पुकारलाई सुनी भगवान् आदिनाथले चन्द्रमालाई चौरंगीनाथ नामाकरण गरी नाथ सम्प्रदायको नवनाथमा राख्नुभयो ।

नावनाथ सिद्धहरूमा आठौँ नाथ महायोगी **मत्स्येन्द्रनाथ**लाई दादा गुरुको रूपमा पूजिने गरिन्छ। मायास्वरूपी लीलाधारी दादागुरु मत्स्येन्द्रनाथ अजर अमर, चराचरमा मायारूपमा विद्यमान हुनुहुन्छ । ॐकार स्वरूप आदिनाथले प्रथमपटक माता पार्वतीलाई नाथ मार्गको गूढ ज्ञान दिँदा नै उहाँले उक्त गोप्य ज्ञान प्राप्त गर्नुभएको थियो। आदिनाथको प्रिय शिष्यको रूपमा मत्स्येन्द्रनाथको नामबाट नाथ मार्गमा प्रचार गर्ने जिम्मा पाउनुभएको थियो। योगीराज मत्स्येन्द्रनाथ महायोगी, महाज्ञानी, योगमाया सिद्ध, मन्त्र तन्त्र सिद्ध, महातपस्वी, महाचमत्कारी सर्व सर्वत्र अनुभव सिद्ध महापुरुष हुनुहुन्छ ।

नवनाथ सिद्धहरूको गणनामा नवौँ नाथको रूपमा भगवान् आदिनाथ स्वयं ज्योतिस्वरूपमा अलख निरञ्जन, निराकार, निर्विकार, निरामय, निर्विकल्प तथा अगम्य अगोचर श्री **शम्भुजति गुरु गोरक्षनाथ** हुनुहुन्छ । गुरु गोरक्षनाथ अनन्त लीलाधारी, सृष्टिका मूलाधार, स्वयं सिद्ध एवं एक कल्पतरु हुनुहुन्छ । प्रत्येक प्राणीका आत्मदेव, समस्त नाथ सिद्ध एवं साधु, सन्त, योगी, स्वामी आदिका परम आराध्यदेव हुनुहुन्छ। 'न भूतो न भविष्यति'को रूपमा आदि अनादि महापुरुष गुरु गोरक्षनाथ सृष्टिभित्रको रहस्यमयी योगीराज हुनुहुन्छ। उहाँ निर्गुण निराकार भएर पनि सगुण साकाररूपमा समस्त जीव जगत्को अत्यन्त प्रिय एवं आदरणीय देव हुनुहुन्छ। स्वयं आदिनाथ भगवान्को ज्योति स्वरूपमा गुरु गोरक्षनाथ प्रतिष्ठित हुनुहुन्छ ।

## आदिनाथद्वारा उदयनाथ (माता पार्वती) लाई उपदेश

निर्गुण निराकार अलख निरञ्जन भगवान् श्री शिव गोरक्षले आदिनाथ शिवरूपमा प्रतिष्ठित भई सृष्टिलाई अगाडि बढाउनुभयो। आफू पूर्ण तेजस्वीस्वरूपमा विद्यमान भई समस्त चराचर जगत्लाई पूर्ण रहस्यमय स्वरूपबाट अगाडि बढाउनुभयो । सृष्टिका समस्त मानव, दानव, देवदेवी, ऋषिमुनि सबैलाई आ-आफ्नो स्थानमा विराजमान गराउनुभयो ।

एक समयमा भगवान् आदिनाथ माता पार्वतीसँग कैलाशमा बस्नुभएको बेलामा नारदजीको आगमन भयो । नारदजीले भगवान् आदिनाथ शिवको स्तुति गर्न लाग्नुभयो। भगवान् शिवको आदिनाथ स्वरूपको नारदजीको गुणगान सुनी माता पार्वतीलाई नाथ रहस्यको जिज्ञासा उठ्यो । आदिनाथलाई एकान्तमा पारी देवी पार्वतीले 'मलाई पनि नाथ मार्गको गूढ रहस्यको ज्ञान प्राप्त होस्' भनी अनुनय गर्नुभयो । यसरी माता पार्वतीको आग्रहलाई स्वीकार गरी आदिनाथ शिवले पराशक्ति पार्वतीलाई क्षीर सागरको एकान्त ठाउँमा लैजानुभयो ।

यसरी नाथहरूका प्रथम नाथ एवं मूलनाथ भगवान् आदिनाथले प्रथम ज्ञान, सारा प्राणीहरूलाई भवसागरबाट तार्न सकिने सिद्धहरूको महाज्ञान, नाथयोग ज्ञान, अमरत्व प्राप्त गर्न सकिने गूढतम ज्ञानको उपदेश दिएर माता पार्वतीलाई प्रथम शिष्य अर्थात् प्रथम नाथ बनाउनुभयो। यसरी भगवान् आदिनाथले गुरु-शिष्य परम्पराभित्रको जीवन्ततालाई शुरुआत गर्नुभयो र देवी पार्वतीलाई उदयनाथको रूपमा दीक्षित गरी नामारण गर्नुभयो ।

जुन क्षणमा आदिनाथ पार्वतीलाई गूढ ज्ञान दिँदै हुनुहुन्थ्यो, त्यसै समय सागरमा माछाको गर्भभित्र रहनुभएका एक बालकले पनि यो गूढ ज्ञान सुन्नुभयो र आदिनाथले मत्स्येन्द्रनाथको नामाकरण गरी उहाँलाई पनि नाथ योगीको रूपमा दीक्षा दिई प्रतिष्ठित गर्नुभयो । जय गुरुदेव !

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौँ। आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ।*

परमपूज्य सद्गुरुदेव नै हाम्रो जीवनको अर्थ, लक्ष्य अनि पूर्णता हुनुहुन्छ । हामीले उहाँको चरणमा बस्ने सौभाग्य पाएका छौँ। यो हाम्रो सौभाग्य हो। आफ्ना पूर्वजले परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको चरणकमलमा बस्ने सौभाग्य पाएका थिए र उहाँको दर्शन पनि गर्ने सौभाग्य पाएका थिए भन्ने थाहा पाएर हाम्रा सन्ततिले आश्चर्यमिश्रित हर्ष अनुभव गर्नेछन् ।

### गुरुदेव सेवकको रूपमा

जब मसँग गुरु मन्त्र छ भने हे भगवान् शिव ! म तपाईँसँग केको आशा गरौँ ? मलाई त जे चाहिन्छ नमागीकन नै मेरा परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजले दिइहाल्नुहुन्छ ।

स्वामी ज्ञानानन्द (भगवान् प्रत्यक्ष हुनुहुँदा भगवान् शिवसँग कुरा गर्नुहुँदै) भन्नुहुन्छ, 'सद्गुरु त्यो हुनुहुन्छ जसले शिष्यको पलपलको हिसाब राख्न सक्नुहुन्छ, जसले शिष्यलाई उसको हात समातेर कुनै पनि अवस्थामा लक्ष्यसम्म पुऱ्याउन सक्नुहुन्छ, जसले उपदेश मात्र नगरी त्यसमा हिँड्न पनि सिकाउन सक्नुहुन्छ। यस प्रकारका सबै योग्यताका आधारमा भन्नुपर्दा पूज्य गुरुदेव नै वास्तवमा सद्गुरु हुनुहुन्छ जसले सम्पूर्ण शिष्यहरूमा समान दृष्टि दिँदै सबैलाई लक्ष्यसम्म पुऱ्याइरहनुभएको छ। यो कुरा प्रत्येक साधकको अनुभूतिबाट प्रष्ट हुन्छ ।

स्वामी हरिनाम उच्च साधक, तपस्वी हुन्। यिनै हरिनाम जीवनको प्रारम्भिक कालमा नै पूज्य गुरुदेवको श्रीचरणमा साधनाको लागि उपस्थित भएका थिए । करिब २०-२१ वर्षको जवानीमा यिनको मनमा अनेक इच्छा, आकांक्षाहरू थिए तर साधनाको क्षेत्रमा भने यिनी बिल्कुलै अन्जान, केही पनि नजान्ने ! यिनमा सेवा भावना भने असाध्यै धेरै थियो, काम गर्ने भिन्दै किसिमको धुन थियो र राम्रोसँग काम गर्ने क्षमता पनि थियो। तर जब साधना गर्ने बेला आउँथ्यो, यिनी न त राम्रोसँग बस्न सक्थे, न त ध्यान लगाउन नै सक्थे । चार वर्षसम्म पनि जब यिनले ध्यान-योगमा सफलता प्राप्त गर्न सकेनन् र राम्रोसँग पद्मासन लगाउन पनि सकेनन्, यिनीसँग गुरुदेव बेस्सरी रिसाउनुभयो । उहाँलाई आफ्नोभन्दा बढी चिन्ता शिष्यको थियो। त्यसैले रिसको आवेगमा गुरुदेवले स्वामी हरिनामलाई नराम्रोसँग पिट्नुभयो । मरणासन्न हुन्जेल कुटाइ खाएर पनि हरिनाम चुप लागिरहे। म हेरिरहेको थिएँ।

बेलुकी ५-६ बजेतिरको घटना थियो त्यो। रिसको झोँकमा गुरुदेव साधना कक्षमा जानुभयो । सधैँजसो साधना कक्षमा गएपछि अर्को दिनको बिहान मात्र बाहिर निस्कनुहुने गुरुदेव त्यस दिन करिब आधा घण्टापछि नै बाहिर निस्कनुभयो। गुरुदेवको अनुहारमा विषाद अनि पीडाको गहिरो चिह्न प्रष्ट देखिन्थ्यो । उहाँले शिष्यको भलो गर्नका लागि अथवा उन्नति, पूर्णताका लागि पिट्नु त भयो तर यसबाट त सहृदयी गुरुदेव स्वयंलाई दुख्न थाल्यो । उहाँ साधना कक्षमा बस्न सक्नुभएन अनि बाहिर निस्किहाल्नुभयो ।

बाहिर निस्केर गुरुदेवले हरिनामलाई खोज्नुभयो र आफ्नो साथैमा राखी जहाँ जहाँ पादप्रहार (लात्तीको चोट) लागेथ्यो त्यहाँ त्यहाँ आफू स्वयंले सेक्न थाल्नुभयो। यसरी सेकताप (सेवा) गर्दागर्दै सारा रात बित्यो । हरिनामको सेवा गुरुदेव स्वयंले रातभरि नसुती गरिरहनुभयो। कुन गुरु यस्तो हुनुहुन्छ होला जसले शिष्यको यसरी ख्याल राख्छ। तीन दिनसम्म भोजन त के एक थोपा पानीसम्म पनि ग्रहण गर्नुभएन गुरुदेवले। खालि हरिनामको सेवा-सुश्रूषामा लागिरहनुभयो ।

जब हरिनाम पूर्णतः स्वस्थ भए अनि मात्र गुरुदेवले अन्न-जल ग्रहण गर्नुभयो। त्यसपछि शक्तिपातद्वारा उनलाई आफ्नो साधना शक्ति प्रदान गर्नुभयो। अनि त उनी त्वरित गतिले साधना क्षेत्रमा बढ्न थाले।

यस्तै गरी साधारण गृहस्थ अरविन्दलाई पनि गुरुदेवले योगीराज बनाउनुभयो । लोकोत्तर साधनाको माध्यमद्वारा

विभिन्न लोकहरूमा आउन-जान सिकाउनुभयो । सन् १९४८ मा मानसरोवरनजिकै आयोजित वृहत् संन्यासी सम्मेलनमा योगीराज अरविन्दले शुक्र ग्रहका निवासी एवं वैज्ञानिक हैप्रीचार्गीजलाई त्यहाँ उपस्थित गराई आचश्चर्यचकित तुल्याइदिएका थिए। स्वामी अरविन्दसँग प्रश्न गर्दा उनले बताए 'मलाई यो ज्ञान पूज्य गुरुदेवबाट प्राप्त भएको हो र गुरुदेव निखिलेश्वरानन्दजीको असीम कृपाद्वारा नै मैले सिद्धाश्रममा प्रवेश पाएको हुँ तथा हैप्रीचार्गीजलाई यहाँ उपस्थित गरी प्रमाण दिन सकेको हुँ ।' यति भन्दाभन्दै उनी गुरुजीको ध्यानमा हराए, भावविह्वल भई आँखाबाट अश्रुकणहरू खस्न थाले । ती सबै धन्य छन् जसलाई यस्ता सद्गुरु प्राप्त हुनुभएको छ। वास्तवमा जीवनमा यदि सद्गुरु भेटिन्छन् भने व्यक्तिले सम्पूर्ण कुरा त्यागेरै भए पनि उहाँको श्रीचरणमा जानु बुद्धिमानी ठहर्छ ।

### संस्थाहरूका जनक तथा शिविरहरूका सञ्चालक

परमपूज्य गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूले आफ्नो संन्यास जीवनमा दिव्याश्रमको स्थापना गर्नुभएको थियो जहाँ साधना सिद्ध गरी संन्यासी शिष्यहरूले सिद्धाश्रममा प्रवेश पाउन सक्छन् । परमपूज्य सद्गुरुदेवका नाउँमा अरू पनि प्रशस्त संस्थाहरू क्रियाशील छन्– अखिल भारतीय ज्योतिष अध्ययन एवं अनुसन्धान केन्द्र, जोधपुर मंत्रशक्ति केन्द्र तथा अरविन्द प्रकाशन जोधपुर, डा. नारायणदत्त श्रीमाली इन्टरनेशनल फाउण्डेशन आदि । भारतमा मात्र नभई अमेरिका, मरिशस, नेपालमा पनि अनेकौं संस्थाहरू गुरुदेवसँग सम्पर्कित भई गुरुदेवकै नाउँमा युग परिवर्तनको सूत्रपात गरिरहेका छन् ।

विभिन्न स्थानहरूमा निखिल धाम, नारायण निवास आदि नामद्वारा गुरु चेतना केन्द्रहरू स्थापन भई कार्य गरिरहेका छन् । यसका अतिरिक्त, विद्यालय तथा साधनालयहरू पनि स्थापना भई सामाजिक प्राणीहरूको समस्या समाधानहेतु साधना, अनुष्ठान निरन्तर सम्पन्न भइरहेका छन्। गुरुदेवको छत्रछायाँमा उहाँका शिष्यहरू दशै दिशामा गतिमान भइरहेका छन् ।

परमपूज्य गुरुदेवले जनचेतनाहेतु अत्यधिक परिश्रमयुक्त जीवन जिउनुभएको छ । दिनमा २४-२४ घण्टासम्म पनि कार्य गर्नुभएको छ । शिविरहरूको प्रारम्भ पनि गुरुदेवले गर्नुभएको हो र आज अध्यात्मको क्षेत्रमा शिविर परम्पराको जनक गुरुदेव नै मानिनुहुन्छ । शिविरहरूमा गुरुदेवले प्रवचनद्वारा प्रकृतिका गोपनीय रहस्यहरू अनावृत गरिदिनुहुन्छ। गुरुदेवको प्रवचन शैलीको बारेमा योगद्वयानन्दजी भन्नुहुन्छ– 'गुरुदेव प्रवचन मात्र दिनुहुन्न, प्रवचनका साथसाथै इच्छानुसार हाँस्नुहुन्छ, गम्भीर हुनुहुन्छ, मुस्कुराउनुहुन्छ, रुनुहुन्छ अनि तन्मय भइदिनुहुन्छ । एक प्रकारकाले श्रोताहरूलाई यस्तो अनुभव हुन्छ कि मानौं एक तीव्रगामी बहावमा बगिएको छ र रोकिने वा विश्राम लिने कुनै ठाउँ नै छैन र त्यो तेज रफ्तारमा कोही रोकिन पनि चाहँदैन, मस्तीका साथ बहिरहन्छ, बहिरहन्छ ।

यसका साथै दीक्षाको कार्यक्रम पनि सम्पन्न हुन्छ जसको माध्यमद्वारा गुरुदेव आफ्नो तपस्याको अंश साधकको शरीरमा प्रवाहित गरी उसलाई साधना सिद्धि प्रदान गर्नुहुन्छ । यति मात्र कहाँ हो र ? साथमा गोपनीय, दुर्लभ तथा अत्यन्त दिव्य साधनाहरू, साधना विधि र महत्त्वमाथि प्रकाश पार्दै तिनीहरूको प्रत्यक्ष प्रयोग समेत गराउनुहुन्छ । शिविरको वातावरण यस्तो भइदिन्छ कि साधक ती भजनहरूमा मस्त भई नृत्यमय भइदिन्छन्, तनावमुक्त भइदिन्छन् अनि निर्द्वन्द्व, निर्भर भई साधना पथमा अघि बढ्छन् ।

पूज्य गुरुदेवको वरदानस्वरूप सन् १९८१ देखि उहाँकै वाणी मन्त्र-तन्त्र-यन्त्र विज्ञानको प्रकाशन शुरु भई यस पत्रिकाले आजसम्म पनि सम्पूर्ण शिष्यहरूको मार्गदर्शन गरिरहेको छ र यो एक यस्तो अनौठो साहसिक पत्रिका हो जो हरेक वर्ण, धर्म, जाति सम्प्रदाय तथा उमेरका व्यक्तिहरूको लागि भनेर प्रकाशित हुन्छ । मन्त्र-तन्त्र-यन्त्र, आयुर्वेद, ज्योतिष, जिज्ञासा, समाधान, योग, रसायन, हस्तरेखा आदि विषयहरूमा समानरूपले यस पत्रिकामा लेख प्रकाशित हुन्छ जसको प्रयोगद्वारा सर्वसाधारणले समेत फाइदा उठाउन सक्छन् र उठाइरहेका पनि छन् । यो पत्रिका गृहस्थको लागि जति उपयोगी छ त्यत्ति नै संन्यासीको लागि पनि, जति एक वृद्धको लागि आवश्यक छ त्यत्ति नै युवा अनि बालकको लागि पनि । वास्तवमा मन्त्र-तन्त्र-यन्त्र विज्ञान गुरुदेवरूप अमृत कलशबाट छचल्किएको अमृतधारा समान छ । यसलाई झम्टेरै भए पनि प्राप्त गरी सबैले आफ्नो जीवनलाई प्रकाशमय बनाउनुपर्दछ । क्रमश:

जय गुरुदेव !

**आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरूप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।**

**यस्यान्तं नादिमध्यं न हि**
**करचरणं नामगोत्रं न सूत्रम् ।**
**नो जातिनैव वर्णो न भवति**
**पुरुषो नो नपुंसं न च स्त्री ॥१९५॥**

भावार्थ : जसको आदि-अन्त छैन, हात, खुट्टा, नाम, गोत्र, सूत्र छैन, जसको कुनै जाति छैन, जसको कुनै वर्ण छैन, जो पुरुष, स्त्री वा नपुंसक केही पनि हुनुहुन्न, यस्ता सद्‌गुरुलाई प्रणाम छ । गुरु तत्त्व निराकार भएको कारणले यी सबै कुराहरूभन्दा बेग्लै हुनुहुन्छ र सूक्ष्मरूपले सर्वत्र व्याप्त हुनुहुन्छ, उहाँ चेतनारूपमा चेतन तथा जड दुवै प्रकारका पदार्थहरूमा समाहित हुनुहुन्छ ।

**नाकारं नो विकारं न हि**
**जनिमरणं नास्ति पुण्यं न पापम् ।**
**नोऽतत्त्वं तत्त्वमेकं सहजसमरसं**
**सद्‌गुरुं तं नमामि ॥१९६॥**

भावार्थ : कुनै आकार नभएको, सम्पूर्ण विकार हरूबाट रहित, जन्म-मृत्युबाट पर, पाप-पुण्यभन्दा बेग्लै, एकात्मस्वरूप, तत्त्व वा अतत्त्व ज्ञानबाट शून्य, सहज तथा एकरस, ब्रह्मस्वरूप सद्‌गुरुलाई नमस्कार गर्दछु । गुरु तत्त्व, जो साक्षात् ब्रह्मस्वरूप हुनुहुन्छ तथा समस्त द्वन्द्व-धर्मरहित हुनुहुन्छ, उहाँको आकारको कल्पना, जन्म-मृत्यु तथा पाप-पुण्यको कल्पना कसरी गर्न सकिन्छ ? निराकारको लागि संकल्प र विकल्प सम्भव नै छैन ।

**नित्याय सत्याय चिदात्मकाय**
**नव्याय भव्याय परात्पराय ।**
**शुद्धाय बुद्धाय निरंजनाय**
**नमोऽस्तु नित्यं गुरुशेखराय ॥१९७॥**

भावार्थ : श्री गुरु जन्म-मृत्यु आदि विनाशरहित हुनुभएकोले नित्य तथा सत्यस्वरूप हुनुहुन्छ, समस्त विश्वप्रपञ्चका सूक्ष्म द्रष्टा हुनुभएकोले चैतन्यस्वरूप हुनुहुन्छ । जो सधैँ नवीन हुनुहुन्छ, समस्त संसार नै जसको आकार-प्रकार छ, समस्त पापहरूबाट मुक्त हुनुभएको कारणले जो पावनमय हुनुहुन्छ, ज्ञानमय हुनुहुन्छ, तीनै गुणहरूभन्दा पर हुनुभएकोले निरञ्जनस्वरूप हुनुहुन्छ, यस्ता परब्रह्मस्वरूप सद्‌गुरुलाई नित्य नमस्कार छ । सद्‌गुरुदेवले शिष्यका दिव्य भावहरूलाई आफ्नो चेतनाले पावनतम बनाइदिनुहुन्छ ।

**सच्चिदानन्द रूपाय**
**व्यापिने परमात्मने ।**
**नमः श्रीगुरुनाथाय**
**प्रकाशानन्द मूर्तये ॥१९८॥**

भावार्थ : सत्, चित् तथा आनन्दस्वरूप गुरु ब्रह्मभन्दा अलग हुनुहुन्न, उहाँ नै समस्त ब्रह्माण्डका चेतनास्वरूप, सबै जीवहरूमा व्याप्त भएर बस्ने परमात्मास्वरूप, सूर्य र चन्द्रमालाई आफ्नो प्रकाशले प्रकाशित गर्ने तथा अरू कुनै प्रकाशले प्रकाशित नहुने आनन्दमूर्ति, जो मानवरूपमा शिष्यलाई आत्मबोध गराउनका लागि यस संसारमा आउनुहुन्छ, यस्ता सद्‌गुरुलाई म भक्तिभावपूर्वक नमस्कार गर्दछु ।

**सत्यानन्द स्वरूपाय**
**बोधैक सुख कारिणे ।**
**नमो वेदान्तवेद्याय**
**गुरवे बुद्धिसाक्षिणे ॥१९९॥**

भावार्थ : सत्य र आनन्दस्वरूप गुरु, जो स्वयं ज्ञानस्वरूप हुनुहुन्छ र यस ज्ञानबाट समस्त संसारलाई सुख दिनुहुन्छ र समस्त बुद्धिका एक मात्र साक्षी हुनुहुन्छ अर्थात् सबैका बुद्धिमा अवस्थित भएर उनीहरूका विचारलाई थाहा पाउनुहुन्छ, तत्त्वमसि आदि उपनिषद् वाक्यहरूको लक्षस्वरूप, यस्ता परमगुरुलाई म हृदयदेखि नमस्कार गर्दछु जसको कृपा-कटाक्ष मात्रले साधक यस दुःख-सागरबाट पार हुन्छ तथा आनन्दमय ब्रह्मस्वरूपमा निमग्न हुन्छ ।

**नमस्ते नाथ भगवन् !**
**शिवाय गुरुरूपिणे,**
**विद्यावतार संसिद्धचै**
**स्वीकृतानेक विग्रहः ॥२००॥**

भावार्थ : शिष्यलाई ज्ञान दिनका लागि ज्ञानस्वरूप, विभिन्न शरीर धारण गर्ने शिवस्वरूप सद्‌गुरुलाई बारम्बार नमस्कार छ । जहिले शिष्यमा अज्ञान-विक्षिप्त अवस्था आउँछ त्यसबेला त्यस्ता शिष्यलाई ज्ञान दिनका लागि शिव नै मानव शरीर धारण गरेर उसलाई पूर्णता प्रदान गर्नुहुन्छ किनभने शिष्य जुन धरातलमा छ उसकै बराबर अवस्थामा आएर नै ज्ञान प्रदान गर्न सकिन्छ । तसर्थ, शिष्य जुन स्थितिमा हुन्छ, गुरु पनि त्यही स्थितिमा आउनुहुन्छ । जय गुरुदेव !

# ध्यान विधि

ध्यानका हजारौँ लाखौँ विधिहरू छन् । प्रत्येक विधि आफैमा पूर्ण छ, दिव्य छ । तर कैयौँ विधिहरू व्यक्तिले आफ्नो मनको लहडअनुसार पनि बनाएको पाइन्छ । यसैले ध्यानका विधिहरू सूक्ष्म तालमेल मिल्ने खालको हुनुपर्दछ । ध्यानको विधि त्यस्तो हो जसलाई अँगाल्दा, जसलाई प्रयोग गर्दा हामीमा परिवर्तन आउन सकोस् ।

ध्यानको विधि तब मात्र सार्थक हुन्छ जब यसलाई प्रयोग गर्दा व्यक्तिले परिवर्तन पाउन सक्छ । व्यक्तिले ध्यान गर्न थालेपछि सोचाइ, विचार, चिन्तनमा फरक आउनुपर्दछ । व्यक्ति स्वयंले परिवर्तनको अनुभूति गर्न सक्नुपर्दछ । वर्षौं ध्यान गर्दा पनि हामीमा कुनै परिवर्तन आएन भने सोच्नुपर्ने हुन्छ कि कतै आफूले अँगालेको विधि गलत त छैन ? यसैले पनि हाम्रा शास्त्रहरूले आध्यात्मिक क्रियाकलापमा अगाडि बढ्दा मार्गनिर्देशक अनुसार अर्थात् गुरु थापेर मात्रै अगाडि बढ्ने सल्लाह दिन्छन् । गुरुबिना ज्ञान प्राप्त गर्न सम्भव हुँदैन । त्यसैले गुरुको निर्देशनअनुसार अथवा जानकार मार्गनिर्देशकको मातहतमा बसेर ध्यान गर्दा नै सफलता प्राप्त गर्न सकिन्छ ।

ध्यानका विभिन्न विधिहरू भएजस्तै विभिन्न स्तरहरू (Levels) पनि छन् । ध्यान आत्मालाई परमात्मासँग जोड्ने माध्यम हो यसलाई एकाग्र एकचित्त बनाउँदै आत्मामा लगेर जोड्ने प्रक्रिया हो । मनलाई वशमा राख्ने प्रक्रिया हो ध्यान । ध्यान सतत प्रक्रिया हो । त्यसैले निरन्तररूपमा ध्यानको अभ्यास गर्नुपर्दछ ।

## ध्यानको पहिलो लेभल (Level)

ध्यानको पहिलो Level मा सातवटा विधिहरू छन् । एउटा विधिको २१ दिनको दरले क्रमिक रूपमा अभ्यास गर्दै हरेक विधिको २१/२१ दिन अभ्यास गर्नुपर्दछ । तब मात्र प्रारम्भिक Level अर्थात् ध्यानको पहिलो Level पूरा हुन्छ ।

## पहिलो विधि (श्वास विधि)

ध्यानको पहिलो विधि श्वाससँग सम्बन्धित छ । हुन त मानव जीवन नै श्वासभित्र छिपेको छ, श्वासले नै मानिसलाई जीवित बनाइराखेको छ । जीवन र मृत्युलाई जोड्ने सशक्त माध्यम नै श्वास हो । यही श्वासलाई बुझ्न सक्दा नै जीवन र मृत्युको रहस्य बुझ्न सकिन्छ । यति मात्रै होइन, जीवनको गूढ रहस्य बुझ्न सकिन्छ । यसरी हेर्दा श्वासले स्थूल शरीर र सूक्ष्म शरीरबीच तालमेल मिलाइराखेको हुन्छ । मानव जीवनमा श्वासको महत्त्वको बारेमा त व्याख्या नै गर्न सकिँदैन । जसको कारणले हामी जीवित छौँ, जागृत छौँ, त्यसको बारेमा सम्पूर्ण चर्चा गर्न सक्ने कुरै आउँदैन ।

भनिन्छ मानिसको मन मस्तिष्कमा प्रत्येकपटक श्वास लिँदा तीन लाख विचार जन्मिन्छन् । यीमध्ये कैयौँ विचारले ठाउँ लिन्छन्, कैयौँ विचारले छाप छोड्छन्, कैयौँ विचार हाम्रो इच्छा, आकांक्षा, आसक्ति आदि बनेर रहन्छन् भने कैयौँ विचारहरू यत्तिकै हटेर जान्छन्, अस्तित्वमा आउँदैनन् । यसरी लाखौँ विचारहरूको कारण मानिस सधैँ तनावमा हुन्छ, चिन्ताग्रस्त भइराखेको हुन्छ, चाहेर नचाहेर यिनै विचार हरूको अधीनमा भइराखेको हुन्छ । यस्तो विचार, इच्छाको

कटौती श्वासको माध्यमबाट गर्न सकिन्छ । श्वासलाई व्यवस्थित गर्न सके, श्वासलाई कम गर्न सके विचारहरूमा पनि कमी गर्न सकिन्छ । यसैले श्वाससँग सम्बन्धित यस ध्यानको आफैमा विशेष महत्त्व रहेको छ ।

## ध्यान गर्ने तरीका :

१. अनुकूल मिल्ने वस्त्र लगाउने, भएमा सल, मालाहरू लगाउने ।

२. धेरै समय बस्दा अप्ठ्यारो लाग्ने आसनमा नबसी सजिलो लाग्ने, अनुकूल हुने सुखासन, अर्धपद्मासन वा अन्य आसनमा बस्न सकिनेछ ।

३. आफ्नो अगाडि गुरुहरूको फोटो वा आफूले मानीआएका देवी देवता वा इष्टहरूको फोटो राख्ने, अगरबत्ती बाल्ने, अनुकूल भए दीयो बाल्ने ।

४. सहस्रारमा परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई गुरुरूपमा धारण गर्ने, हृदयमा आफूले मानेका देवी देवताहरूलाई धारण गर्ने ।

५. तीनपटक ॐकार गर्ने र तलको श्लोक तीनपटक उच्चरण गर्ने-

**"गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥"**

६. त्यसपछि दुवै हात रगडेर आँखा सेक्ने र आफ्नो अगाडि ढोगिदिने ।

७. दाहिने हातको बूढी औंलाले दाहिने नाकको प्वाल थुन्ने र बायाँ नाकको प्वालबाट बिस्तारै श्वास भित्र लिने, करिब २/३ सेकेण्डपछि बिस्तारै बायाँबाटै फालिदिने ।

८. यसरी बायाँपट्टिबाट सातपटक श्वास भित्र लिने र बायाँबाटै छाडिदिने गर्ने ।

९. त्यसपछि देब्रे हातको बूढी औंलाले देब्रे नाकको प्वाल बन्द गर्ने र दायाँ नाकको प्वालबाट बिस्तारै श्वास लिने,

२/३ सेकेण्ड रोक्ने र बिस्तारै दायाँबाटै छोडिदिने ।

१०. यसरी दायाँपट्टिबाट पनि सातपटक श्वास भित्र लिने र दायाँबाटै छाडिदिने गर्ने ।

११. त्यसपछि ढाड सीधा राखी श्वास भित्र आइरहेको र श्वास बाहिर गइरहेको सम्झेर ध्यान गर्ने ।

१२. ध्यान आफ्नो अनुकूलताअनुसार १५ मिनेटदेखि ३०, ४५, ६० मिनेटसम्म गर्न सकिनेछ ।

१३. तीनपटक ॐकार उच्चारण गर्ने ।

१४. तीनपटक तलको श्लोक उच्चारण गरेर भन्ने-

**"गुरुर्ब्रह्मा गुरुर्विष्णुः गुरुर्देवो महेश्वरः**
**गुरुः साक्षात् परब्रह्म तस्मै श्री गुरवे नमः ॥"**

१५. दुवै हात रगडेर शिरमा सेक्ने, आँखामा सेक्ने, घाँटीमा सेक्ने, छातीमा सेक्ने, नाभिमा सेक्ने, पुनः दुवै हात रगडेर आँखामा सेक्ने, आफ्नो हत्केला हेर्दै अगाडि ढोगिदिने । जय गुरुदेव !



जब तिमी आफ्नो जीवनदेखि दिक्क हुन्छौ, जब समाजका कुचक्रहरुबाट घेरिन्छौ, जब बाधाहरुले चारैतर्फबाट तिमीलाई आक्रमण गर्नेछन्, जब पत्नी, पुत्रहरुले स्वार्थको डरलाग्दो मुकुण्डो लगाएर तिमीलाई व्यथित गरिरहेका हुनेछन्, जब तिमी पण्डा, पूजारीहरुबाट आजीत हुनेछौ र नग्न सत्य देखेर तिक्तताले अनुहारको रुपरेखा फेरिनेछ, तब म तिम्रा समस्याहरुको समाधानको लागि सामुन्ने चट्टान सरी उभिएको भेटिनेछु, तब तिमीले मेरो कुरा सुन्नु नै पर्नेछ, म जे कुरा भन्दैछु त्यसलाई बुझ्नु नै पर्नेछ, र मैले जुन बाटोतर्फ संकेत गर्दैछु त्यसलाई स्वीकार्नु नै पर्दछ किनकि यी सबैको केवल र एक मात्र विकल्प म नै हुँ ।

*– परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज*

# आफ्नो हात आफै हेरौं

*यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखा सम्बन्धि विविध पक्षहरूलाई चर्चा गर्दै आइरहेका छौं । यस अंकमा हत्केलामा रहेका विभिन्न रेखाहरूको उद्गम स्थानहरूका बारेमा चर्चा गरिएको छ। यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ ।*

### रेखाहरूको उद्गम स्थान

१. जीवन रेखा : यसलाई अंग्रेजीमा 'लाइफ लाइन' भनिन्छ । यसलाई केही विद्वान्हरू पितृ रेखा वा आयु रेखा पनि भन्दछन् । पूरै हत्केलामा यस रेखाको महत्त्व सबैभन्दा बढी छ किनकि यदि जीवन छ भने सबै छ, जुन दिन जीवन समाप्त हुन्छ त्यस दिन बाँकी रेखाहरूको प्रभाव पनि व्यर्थ हुन जान्छ ।

जीवन रेखा वृहस्पति पर्वतको मुनि हत्केलाको छेउबाट उठेर चोरी र बूढी औंलाको बीचबाट प्रारम्भ भएर शुक्र पर्वतलाई घेर्दै मणिबन्धमा गएर विश्राम गर्दछ । संसारमा जति पनि प्राणी छन्, ती सबैको हत्केलामा यो रेखा यहीं देखिन्छ । यसै रेखाबाट व्यक्तिको आयु, स्वास्थ्य, रोग, आरोग्यता आदिको जानकारी प्राप्त हुन्छ ।

सबै मानिसको हत्केलामा यो रेखा एउटैजस्तो देखिन्न । केही मानिसको हत्केलामा यो रेखा गहिरो र लामो हुन्छ भने कसैको हातमा यो रेखाले हत्केलाको शुक्र पर्वतलाई अत्यन्तै संकीर्ण बनाउँछ । कुनै कुनै मानिसको हत्केलामा यो रेखा शुक्र पर्वतको नजिकमा गएर टुटेको देखिन्छ । यस्ता व्यक्तिहरू निश्चय नै कम आयु भएका हुन्छन् र यिनीहरूको मृत्यु दुर्घटनाबाट हुन्छ ।

जीवन रेखाबाट मानिसको पूरै जीवनको बारेमा साधारणत: जान्न सकिन्छ ।

२. मस्तिष्क रेखा :

अंग्रेजीमा यसलाई 'हेड लाइन' भनिन्छ । बुद्धि रेखा, शीश रेखा, प्रज्ञा रेखा अथवा मातृ रेखा भनेर यसै रेखालाई जानिन्छ ।

यस रेखाको प्रारम्भ वृहस्पति पर्वतको नजिक वा वृहस्पति पर्वतको माथिबाट हुन्छ । अधिकांश हत्केलामा मस्तिष्क रेखाको उद्गम एउटै स्थानबाट भएको पाइएको छ । तर कतिपय हत्केलामा यसको उद्गम एउटै नभएर नजिक-नजिक भएको देखिन्छ । यस रेखाले हत्केलालाई दुई भागमा बाँडेर राहु र हर्षललाई छुट्याई बुध क्षेत्रको तलसम्म आएको पाइन्छ । यो सम्पूर्ण रेखालाई मस्तिष्क रेखा भनिन्छ ।

यस रेखाको स्थिति बेग्लाबेग्लै हत्केलामा भिन्नाभिन्नै रूपमा देखापर्दछ । जुन व्यक्तिको मस्तिष्क तीखो, उर्बर तथा क्रियाशील हुन्छ अथवा जो बुद्धिजीवी छ, त्यस्तो व्यक्तिको हत्केलामा यो रेखा लामो, गहिरो र स्पष्ट हुन्छ । यसको विपरीत जो शारीरिक श्रम गर्ने हुन्छन् वा जसको मस्तिष्क कमजोर छ अथवा जो श्रमजीवी छन् तिनीहरूको हत्केलामा यो रेखा कि त धमिलो, अस्पष्ट जस्तै हुन्छ अथवा बीच-बीचमा कतिपय स्थानमा यो रेखा टुटेको देखिन्छ । यस रेखाबाट मानिसको मस्तिष्कको राम्रोसँग अध्ययन गर्न सकिन्छ ।

३. हृदय रेखा

यस रेखालाई अंग्रेजीमा 'हार्ट लाइन' भनिन्छ । यो विचार रेखा हो । यो रेखा बुध पर्वतको तलबाट शुरु भएर बुध तथा प्रजापतिको क्षेत्रलाई अलग-अलग गर्दै चोरी औंलाको तल वा गुरु पर्वतको तलसम्म पुग्दछ । सामान्यत: यो रेखा सबै मानिसको हत्केलामा देखिन्छ किनकि यस रेखाको सीधा सम्बन्ध हृदयसँग हुन्छ । तर डाँका तथा हृदयहीन मानिसको हत्केलामा यो रेखाको सर्वथा अभाव भएको पाइएको छ । जुन मानिसको हत्केलामा यो रेखा कमजोर हुन्छ, वस्तुत: त्यो व्यक्ति अमानवीय एवं क्रूर हुन्छ ।

बेग्लाबेग्लै हत्केलामा यो रेखा भिन्नाभिन्नै लम्बाइको हुन्छ । कुनै हत्केलामा यो रेखा चोरी औंलासम्म, कुनैमा माझी औंलासम्म र कुनैमा कान्छी, साहिँली औंलासम्म गएर समाप्त हुन्छ । कुनै मानिसमा त यो रेखा गुरु क्षेत्रलाई पार गरेर हत्केलाको अर्कोपट्टिसम्म पुगेको पनि देखिएको छ । यस्तो लामो रेखा अत्यन्तै कम मानिसको हत्केलामा मात्र देख्न पाइन्छ ।

४. सूर्य रेखा

अंग्रेजीमा यसलाई 'अपोलो लाइन' वा 'सन लाइन' अथवा 'लाइन अफ सक्सेस' भनिन्छ । सूर्य रेखा, रवि रेखा अथवा प्रतिभा रेखाको नामले जानिने यस रेखाको उद्‌गम विभिन्न व्यक्तिहरूको हातमा विभिन्न स्थानहरूमा देखिएको पाइन्छ। तर सबै मानिसको हत्केलामा यस रेखाको समाप्ति सूर्य पर्वतमा गएर नै हुन्छ । यस रेखाको प्रारम्भ करिब तीस स्थानबाट भएको पाइएको छ । त्यसैले रवि रेखा वा सूर्य रेखा त्यसैलाई मान्नुपर्दछ जसको समाप्ति सूर्य पर्वतमा गएर हुन्छ ।

५. भाग्य रेखा

अंग्रेजीमा 'फेट लाइन' भनिने यस रेखालाई भाग्य रेखा, ऊर्ध्व रेखा अथवा प्रारब्ध रेखा भनिन्छ ।

यो रेखा सबै मानिसको हत्केलामा भने देखिन्न । साथै यस रेखाको उद्‌गम पनि धेरै ठाउँबाट हुन्छ । तर एउटै कुरा भने राम्रोसँग बुझ्नुपर्दछ कि जुन रेखाको समाप्ति शनि पर्वतमा गएर हुन्छ त्यही रेखालाई भाग्य रेखा भन्न सकिन्छ । जबसम्म यो शनि पर्वतमा पुग्दैन तबसम्म यस रेखालाई भाग्य रेखा भन्नु उचित हुँदैन ।

कतिपय हत्केलामा यो रेखा बुध पर्वतमा पनि पुगेको देखिन्छ तर वास्तवमा यो रेखा भाग्य रेखा नभएर कुनै अन्य रेखा नै हुन्छ । यस रेखाको विकास हत्केलामा तलबाट माथितिर हुन्छ । केही हत्केलामा यो रेखा शुक्र पर्वतबाट प्रारम्भ हुन्छ भने कुनैमा मणिबन्धबाट प्रारम्भ भएर माथितिर उठेको देखिन्छ । केहीमा भने यो रेखा सूर्य पर्वतको नजिकैबाट निस्केर शनि पर्वतमा पुग्दछ । अतः यस रेखाको समाप्तिको स्थानबाट यस रेखाको उद्‌गमलाई पत्ता लगाउनु पर्दछ ।

६. स्वास्थ्य रेखा

अंग्रेजीमा 'हेल्थ लाइन' भनिने यो रेखाको सम्बन्ध स्वास्थ्यसँग छ । तर यस रेखाको उद्‌गमको कुनै निश्चित स्थान भने छैन । यो मंगल पर्वत, जीवन रेखा, हत्केलाको बीच वा कहींबाट पनि प्रारम्भ हुन सक्दछ । तर स्मरणीय छ, यस रेखाको समाप्ति बुध पर्वतमा नै गएर हुन्छ र जुन रेखा बुध पर्वतसम्म पुग्दछ वास्तवमा त्यही रेखालाई स्वास्थ्य रेखा मान्न सकिन्छ । कुनै हत्केलामा यो रेखा अत्यन्तै मोटो देखिन्छ भने कुनैमा रौँभन्दा पनि मसिनो देखिन्छ । यस रेखाको अध्ययन अत्यन्तै सावधानीका साथ गर्नुपर्दछ । यसको माध्यमबाट स्वास्थ्य, तन्दुरुस्ती, रोग आदिको अध्ययन गर्न सकिन्छ ।

७. विवाह रेखा

यसलाई अंग्रेजीमा 'लव लाइन' वा 'म्यारिज लाइन' भनिन्छ । यो बुध पर्वतमा हुन्छ । हत्केलाको बाहिरी भागबाट बुध पर्वतको भित्रतिर आएको जुन रेखा छ त्यही रेखा नै विवाह रेखा हो । केही व्यक्तिको हत्केलामा यस्ता तीन-चार रेखाहरू हुन्छन् तर यसबाट त्यो मानिसको विवाह तीन-चार जना स्त्रीसँग हुन्छ भन्ने मान्न हुन्न । यसको अर्थ यो अवश्य हुन्छ कि उसको सम्बन्ध तीन-चारजनासँग हुन्छ । यी तीन-चार रेखाहरूमा जुन रेखा गहिरो र स्पष्ट हुन्छ, वास्तवमा त्यही रेखा विवाह रेखा मानिन्छ ।

कतिपयमा यस्तो पनि देखिएको छ कि मानिसको हत्केलामा विवाह रेखा भएर पनि त्यो आजीवन कुमार नै रहेको हुन्छ । जब विवाह रेखामा कुनै पनि प्रकारको क्रस बनेका छ भने यो बुझ्नु पर्दछ कि उक्त मानिसको सम्बन्ध बनेर समाप्त हुन्छ, जीवनमा विवाह हुन सक्दैन । यदि विवाह रेखाको साथमा रहेका रेखाका साथ स-साना चिह्न छन् भने त्यस व्यक्तिको जीवनमा अनैतिक सम्बन्ध बनिरहन्छ । क्रमशः

जय गुरुदेव !

# मङ्सिर महिनाको सूक्ष्म काल विवरण

**आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो। यस अंकमा मङ्सिर महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला।**

## मंसिर महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय-प्रसंग, विवाह, यात्रा आदिका लागि यस समयको चुनाव गर्नुपर्दछ। यस समयका देवता 'गौतम' हुन्, कार्य प्रारम्भ गर्नुअघि पान खानु शुभ मानिन्छ।

६ देखि १० मिनेटसम्म : यात्रा, शुभ-कार्य, कुरा छिन्ने, विवाह, माङ्गलिक कार्य, व्यापारिक कार्य, द्युत आदिका लागि यो समय शुभ छ। यस समयका देवता 'चन्द्र' हुन्, दहीको भक्षण शुभ मानिन्छ।

११ देखि १५ मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति आदिका लागि यस समयको चुनाव गर्नुपर्दछ। यस समयका अधिष्ठाता 'मरुत्' हुन्, तिलको भक्षण शुभ मानिन्छ।

१६ देखि २० मिनेटसम्म : यात्रा, द्युत कार्य, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ। यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दहीको भक्षण शुभ मानिन्छ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, खरिदारी र शुभ कार्यका लागि यो समय अनुकूल छ। यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पानको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ।

२६ देखि ३० मिनेटसम्म : यात्राको दृष्टिले यो समयको विशेष महत्त्व छ। यस समयका अधिष्ठाता 'गणेश' हुन्, दूबोको चर्वण शुभ मानिन्छ।

३१ देखि ३५ मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ। यस समयका देवता 'सूर्य' हुन्, सख्खर खाएर यात्रा प्रारम्भ गर्नुपर्दछ।

३६ देखि ४० मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम-प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ। यस समयका अधिष्ठाता देवता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गर्दा विशेष शुभ हुन्छ।

४० देखि ४५ मिनेटसम्म : चुनाव, परीक्षा, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको चुनाव गर्नुपर्दछ। यस समयका स्वामी 'विष्णु' हुन्, चामल खाएर कार्य गर्नु विशेष शुभ मानिन्छ।

४६ देखि ५० मिनेटसम्म : व्यापार कार्यका लागि यस समयको चुनाव गर्नु विशेष शुभ छ। यस समयकी देवी ' लक्ष्मी' हुन्, दूध-प्रसाद भक्षण गरेर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिन्छ।

५१ देखि ५५ मिनेटसम्म : शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ। यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नु पहिले धनियाँको सेवन अनुकूल हुन्छ।

५६ देखि ६० मिनेटसम्म : कुनै पनि प्रकारको उन्नति, व्यापार, नोकरी, यात्रा आदिको लागि यो समयको चुनाव गर्नु शुभ मानिन्छ। यस समयकी देवी 'गौरी' हुन्, हरिद्रा भक्षण शुभ मानिन्छ।

## मंसिर महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : द्युत कार्य, व्यापार, यात्रा आदिका लागि यो समय उपयुक्त छ। यस समयका देव ' शनि' हुन्, तिलको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ।

६ देखि १० मिनेटसम्म : यात्रा स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ, मुहूर्त आदिका लागि यो समयको चुनाव शुभ छ। यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध-प्रसाद भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ।

११ देखि १५ मिनेटसम्म : यात्राको लागि यो समय शुभ छ। यस समयका देवता 'गणपति' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ।

१६ देखि २० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यो समयको चुनाव छ। यस समयका देवता 'रुद्र' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ।

२१ देखि २५ मिनेटसम्म : परीक्षा, चुनाव, इन्टरभ्यू, जागिरको प्रारम्भ तथा यात्रादिका लागि यो सयम शुभ

# आश्विन, कार्तिक, मंसिर र पौष महिनामा पर्ने विभिन्न कालहरु

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* |
| ६:००-७:३६बिहान | शून्य | ६:००-९:१२बिहान | अमृत | ६:००-७:३६बिहान | अमृत | ६:००-६:४८बिहान | शून्य | ६:००-६:४८बिहान | अमृत | ६:००-९:१२बिहान | वक्र | ६:००-७:३६बिहान | शून्य |
| ७:३६-१०:०० | अमृत | ९:१२-१०:४८ | महेन्द्र | ७:३६-१०:०० | वक्र | ६:४८-८:२४ | महेन्द्र | ६:४८-८:२४ | शून्य | ९:१२-१०:४८<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | ७:३६-९:१२<br>*९:००-१०:३०* | वक्र<br>*राहु* |
| १०:००-१२:२४ | वक्र | १०:४८-१:१२ | शून्य | १०:००-१०:४८ | अमृत | ८:२४-११:३६ | अमृत | ८:२४-१०:४८ | वक्र | १०:४८-११:३६<br>*१०:३०-१२:००* | शून्य<br>*राहु* | ९:१२-१०:४८<br>*९:००-१०:३०* | शून्य<br>*राहु* |
| १२:२४-२:४८ | अमृत | १:१२-३:३६ | अमृत | १०:४८-१२:२४ | शून्य | ११:३६-२:००<br>*१२:००-१:३०* | वक्र<br>*राहु* | १०:४८-१२:२४ | अमृत | ११:३६-१२:२४<br>*१०:३०-१२:००* | अमृत<br>*राहु* | १०:४८-२:०० | अमृत |
| २:४८-४:२४ | वक्र | ३:३६-६:०० | महेन्द्र | १२:२४-२:४८ | महेन्द्र | २:००-५:१२ | शून्य | १२:२४-१:१२ | शून्य | १२:२४-२:०० | वक्र | २:००-२:४८ | शून्य |
| ४:२४-५:१२<br>*४:३०-६:००* | अमृत<br>*राहु* | ६:००-८:२४रात्रि | वक्र | २:४८-५:१२<br>*३:००-४:३०* | शून्य<br>*राहु* | ५:१२-६:०० | वक्र | १:१२-२:४८<br>*१:३०-३:००* | वक्र<br>*राहु* | २:००-४:२४ | अमृत | २:४८-४:२४ | वक्र |
| ५:१२-६:००<br>*४:३०-६:००* | शून्य<br>*राहु* | ८:२४-११:३६ | अमृत | ५:१२-६:०० | वक्र | ६:००-६:४८रात्रि | शून्य | २:४८-५:१२<br>*१:३०-३:००* | अमृत<br>*राहु* | ४:२४-६:०० | महेन्द्र | ४:२४-५:१२ | शून्य |
| ६:००-७:३६ रात्रि | शून्य | ११:३६-२:०० | वक्र | ६:००-८:२४रात्रि | वक्र | ६:४८-१०:४८ | अमृत | ५:१२-६:०० | महेन्द्र | ६:००-७:३६रात्रि | वक्र | ५:१२-६:०० | महेन्द्र |
| ७:३६-९:१२ | अमृत | २:००-३:३६ | अमृत | ८:२४-११:३६ | अमृत | १०:४८-२:०० | वक्र | ६:००-७:३६रात्रि | शून्य | ७:३६-८:२४ | शून्य | ६:००-६:४८रात्रि | शून्य |
| ९:१२-११:३६ | वक्र | ३:३६-४:२४ | शून्य | ११:३६-२:०० | वक्र | २:००-४:२४ | अमृत | ७:३६-९:१२ | वक्र | ८:२४-१०:४८ | अमृत | ६:४८-८:२४ | वक्र |
| ११:३६-२:०० | अमृत | ४:२४-६:०० | वक्र | २:००-३:३६ | अमृत | ४:२४-५:१२ | शून्य | ९:१२-१०:०० | शून्य | १०:४८-१:१२ | शून्य | ८:२४-१०:४८ | अमृत |
| २:००-३:३६ | शून्य | | | ३:३६-४:२४ | शून्य | ५:१२-६:०० | वक्र | १०:००-१२:२४ | अमृत | १:१२-२:०० | महेन्द्र | १०:४८-१२:२४ | वक्र |
| ३:३६-६:०० | वक्र | | | ४:२४-६:०० | वक्र | | | १२:२४-२:४८ | वक्र | २:००-२:४८ | शून्य | १२:२४-२:४८ | अमृत |
| | | | | | | | | २:४८-३:३६ | शून्य | २:४८-६:०० | वक्र | २:४८-४:२४ | वक्र |
| | | | | | | | | ३:३६-६:०० | वक्र | | | ४:२४-६:०० | अमृत |

परमपूज्य सद्गुरुदेव डा.नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज)द्वारा रचित ***'ज्योतिष और काल निर्णय'*** ग्रन्थमा आधारित ।

**महेन्द्रकाल– सर्वश्रेष्ठ, अमृतकाल– श्रेष्ठ, वक्रकाल– सामान्य, शून्यकाल– निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैँ अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६६ मङ्सिर १५ गते सोमबार बिहान ७:१३ बजेको सूक्ष्म विवेचना गरौँ । सोमबार प्रात: ६:०० देखि ९:१२ बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:१३ बाट हाम्रो काल शुरु भएको समय ६:०० घटाऔँ । बाँकी रह्यो १:१३ अर्थात् १ घण्टा १३ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- १३ मिनेट । त्यसपछि मङ्सिर महिनाको अमृतकालमा १३ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **११ देखि १५ मिनेटसम्म : यात्राको लागि यो समय शुभ छ । यस समयका देवता 'गणपति' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

छ । यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही भक्षण शुभ मानिन्छ ।

२६ देखि ३० मिनेटसम्म : कुनै पनि प्रकारको कार्यको लागि यो शुभ समय हो । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

३१ देखि ३५ मिनेटसम्म : द्युत कार्य, व्यापार प्रारम्भ गर्नु, कुनै पनि घर वा पसलको मुहूर्त आदिको लागि यो समय शुभ छ । यस समयका देवता 'विष्णु' हुन्, सख्खर खानु शुभ छ ।

३६ देखि ४० मिनेटसम्म : द्युत कार्य, व्यापार, व्यवसायका लागि यात्रा, यज्ञ, पूजन, अनुष्ठानका आदिका लागि यो समय शुभ छ । यस समयका देवता 'शिव' हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

४० देखि ४५ मिनेटसम्म : स्थायी कार्य एवं व्यापार, उन्नति तथा यात्रादिका लागि यो शुभ समय हो । यसका अधिष्ठात्री देवी 'गौरी' हुन्, दूबो खानु शुभ मानिन्छ ।

४६ देखि ५० मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यस समयको चुनाव गर्नु शुभ हो । यस समयका प्रधान देव 'विष्णु' हुन्, मीठो पकवान भक्षण शुभ मानिन्छ ।

५१ देखि ५५ मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ । यस कालकी देवी 'सरस्वती' हुन्, मुगीको दाना चपाएर यात्रा प्रारम्भ गर्नु शुभ मानिन्छ ।

५६ देखि ६० मिनेटसम्म : विवाह, कुरा छिन्ने काम, प्रस्थान, इन्टरभ्यू, मुद्दा-मामिला आदिका लागि यो समय शुभ मानिन्छ । यस समयका अधिष्ठाता देव 'हनुमान्' हुन्, चाकुको भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिन्छ ।

## मंसिर महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : यात्राका लागि आरम्भमा केही बाधाकारक भए पनि अन्तमा ठीक छ । यसका प्रधान देव 'अग्नि' हुन्, सर्स्यूँ चबाएर कार्य प्रारम्भ गर्नु उत्तम मानिन्छ ।

६ देखि १० मिनेटसम्म : प्रेम-प्रदर्शन, प्रणय आदिका लागि यो समयको चुनाव ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह भक्षण गरेर हिँड्नु शुभ छ ।

११ देखि १५ मिनेटसम्म : मित्रता बढाउने, अधिकार प्राप्त गर्ने, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यस समयका प्रधान देव 'सूर्य' हुन्, जिराको भक्षण शुभ मानिन्छ ।

१६ देखि २० मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत्' यस समयका प्रधान देव हुन्, चाकुको भक्षण गरेर यात्रारम्भ शुभ मानिन्छ ।

२० देखि २५ मिनेटसम्म : व्यापारिक कार्यका लागि यो समय शुभ छ । यस समयका प्रधान देव 'गुरु' हुन्, बेसनबाट बनाइएका मिठाइको प्रयोग शुभ मानिन्छ ।

२६ देखि ३० मिनेटसम्म : प्रेम, वाद्य, द्युत आदिका लागि शुभ समय हो । यस समयका प्रधान देव 'पुष्पधन्वा' हुन्, महको सेवन शुभ मानिन्छ ।

३१ देखि ३५ मिनेटसम्म : व्यापार आदिका लागि यो समय अपेक्षाकृत ठीक छ । यस समयका प्रधान देव 'गरुड' हुन्, हरिद्रा भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

३६ देखि ४० मिनेटसम्म : द्युत कार्यका लागि उपयुक्त समय हो । यस समयका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुपर्दछ ।

४० देखि ४५ मिनेटसम्म : जासूसी, भेद ज्ञान गर्ने, सामुन्नेको व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यस समयका प्रधान देव 'वात' हुन्, चामल खाएर यात्रा गर्नुपर्दछ ।

४६ देखि ५० मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्य अनुकूल छ । यस समयका प्रधान देव 'चन्द्रमा' हुन्, दही भक्षण शुभ मानिन्छ ।

५१ देखि ५५ मिनेटसम्म : जुवा, दौड, चलचित्र, व्यापार आदिको लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन्, पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

५६ देखि ६० मिनेटसम्म : यात्रा आदिका लागि यो समय विशेष अनुकूल छ । यस समयका प्रधान देव 'गणपति' हुन्, चाकुको भक्षण शुभ मानिन्छ ।

## मंसिर महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : प्रत्येक कार्य व्यवधानपूर्ण छ, तर पनि 'गौरी'को स्मरण र दहीको भक्षणपछि कार्य प्रारम्भ गर्नाले केही अनुकूलता ।

६ देखि १० मिनेटसम्म : द्युत कार्यका लागि शुभ । यस समयका देवता 'काल' हुन्, मह भक्षण गरेर हिँड्नु अनुकूल छ ।

११ देखि १५ मिनेटसम्म : प्रणय-प्रसंग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल । यस समयका प्रधान देवता 'शुक्राचार्य' हुन्, फलको सेवन गरेर हिँड्नुपर्दछ ।

१६ देखि २० मिनेटसम्म : द्युत, मद्य, घोडादौड, सौन्दर्य प्रसाधन सामग्रीको विक्रय, व्यापार आदिका लागि अनुकूल । यसका प्रधान देवता 'विश्वकर्मा' हुन्, चाकु, घिउको भक्षण शुभ मानिन्छ ।

२१ देखि २५ मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल छ । यस समयका प्रधान देवता 'मकरध्वज' हुन्, सर्स्यूँ चबाउनु शुभ ।

२६ देखि ३० मिनेटसम्म : शुभ, यात्रादिका लागि अनुकूल । यस समयका प्रधान देवता 'ब्रह्मा' हुन्, दहीको सेवन शुभ मानिन्छ ।

३१ देखि ३५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं झन्झटपूर्ण, तर पनि गणपतिको स्मरण र चाकु खाएर कार्य प्रारम्भ गर्दा शुभ ।

३६ देखि ४० मिनेटसम्म : कार्यको प्रारम्भमा झन्झट तर पछि स्थितिमा सुधार । प्रधान देव 'अग्नि'को स्मरण र तिलको भक्षण शुभ ।

४१ देखि ४५ मिनेटसम्म : बाधाकारक समय, तर मुद्दा-मामिलाको लागि शुभ । यस समयका देवता 'हनुमान्' हुन्, चाकु, घिउ खाएर यात्रा गर्दा अनुकूल ।

४६ देखि ५० मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, प्रधान देवता 'चित्रगुप्त'को स्मरण र फूलको भक्षण गरेर कार्यको प्रारम्भ गर्दा केही अनुकूलता ।

५१ देखि ५५ मिनेटसम्म : प्रत्येक कार्य वा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । यसकी प्रधान देवी 'लक्ष्मी' हुन्, चामल भक्षण शुभ ।

५६ देखि ६० मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक, तर 'हिडिम्बा'को स्मरण र घृत भक्षण शुभ छ ।

जय गुरुदेव !

# क्यान्सर गायब !

२०६५ साल कार्तिक/मंसिरतिरको कुरा हो । मेरो छातीमा सानो डल्लोजस्तो थियो । २ वर्षअघिदेखि नै डल्लो देखिए पनि मैले भने त्यसलाई त्यति वास्ता गरेकी थिइन । परिवारका सबैलाई जानकारी दिइसकेपछि तुरुन्तै डाक्टरलाइ देखाउनुपर्ने कुरा उठ्यो । ढिलो गरी डाक्टर जचाउन आएकोमा डाक्टरले पनि आपत्ति जनाउनुभयो । मैले नदुःखेको हुनाले जँचाउन आवश्यक नठानेकी बताएँ । मेरो वायोप्सी गर्नुपर्ने भयो । सानो अप्रेसन गरेर वायोप्सी भयो । केही दिनपछि रिपोर्ट आउँदा मलाई ब्रेष्ट क्यान्सर भएको देखियो । अप्रेसन नगरी ठीक नहुने भनियो । परिवारका सबैलाई चिन्ता भयो । के गर्ने, कसो गर्ने भन्ने चिन्ताले व्याकुल बनाउन थाल्यो । धेरै डाक्टरहरूलाई रिपोर्ट देखाएँ । रोग कति फैलिएको छ भन्ने थाहा पाउन सि.टी. स्क्यान गर्न पठाइयो । म भने गुरुदेव हुनुहुन्छ भन्ने सम्झिरहन्थेँ, गुरुदेवलाई पुकारिरहन्थेँ र मनमनै गुरु मन्त्र जपिरहन्थेँ । मलाई सि.टी. स्क्यानका लागि भित्र लगियो । मेशिनमा मैले गुरु र पहेँलो रंग देखेँ । रिपोर्टमा क्यान्सर धेरै फैलिइसकेको भने देखिएन । उक्त रिपोर्ट लिएर भक्तपुरको अर्बुद (क्यान्सर) अस्पताल गयौँ । त्यहाँका क्यान्सरका वरिष्ठ डाक्टरलाई रिपोर्ट देखायौँ । उहाँले तुरुन्त अप्रेशन नगरे रोग फैलिने सम्भावना देखाउनुभयो । त्यस दिन भर्ना नभइकन पैसाको व्यवस्था गर्न र सरसल्लाहका लागि हामी घर फर्क्यौँ । घरमा आइसकेपछि एकजना आफन्तले फोन गरेर अर्को डाक्टरलाई सम्पर्क राख्नुभयो । हामी रिपोर्ट लिएर उक्त डाक्टर कहाँ गयौँ । उहाँले सबै रिपोर्ट हेरेर पुनः परीक्षण गर्नुपर्ने सल्लाह दिनुभयो । पुनः परीक्षण थालियो । रिपोर्ट आउन केही समय लाग्यो । रिपोर्ट आउनुभन्दा ३-४ दिन अघि गुरुदेवहरूलाई सम्झेर सुतिरहेकी थिएँ, सपनामा परमपूज्य सद्‌गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको संन्यासी स्वरूपको दर्शन भयो । म गुरुदेवसँगै थिएँ । उहाँले भन्नुभएका कुरा मलाई सम्झना भने छैन । म तुरुन्तै ब्यूँझिएँ । मैले गुरुदेवलाई स्मरण गरेर प्रणाम गरेँ । रिपोर्ट आएपछि डाक्टरले सबै राम्रो छ, केही चिन्ता लिनु पर्दैन भन्नुभयो । उहाँले मलाई केही नभएको पनि जानकारी दिनुभयो । हामी सबै छक्क पर्दै घर आयौँ । गुरुदेवलाई सम्झी-सम्झी मेरो आँखामा आँसु छचल्कियो । गुरुदेवको यत्रो कृपाप्रति हामी सबै नतमस्तक भयौँ, घरमा खुशीयाली छायो ।

परमपूज्य सद्‌गुरुदेवहरूलाई कोटिकोटि प्रणाम अर्पण गर्दै उहाँको कृपा, आशीर्वाद सबैमाथि यसरी नै वर्षिरहोस्, यसरी नै सबैले उहाँको न्यानो र कोमल स्नेह पाइरहून्, यही शुभेच्छा प्रकट गर्दै यस अनुभवलाई यहीँ विश्राम दिन्छु ।

जय गुरुदेव !

–भवानी गौतम
काठमाडौँ ।

मन्त्र तन्त्र यन्त्र विज्ञानसम्बन्धी
नेपालकै पहिलो रेडियो कार्यक्रम

## गोरक्ष निखिल सन्देश

gnsandesh@ssk.org.np

| स्थान | समय (बिहान) | स्टेशन | मेगाहर्ज |
|---|---|---|---|
| पोखरा | सोमबार ५:०५–५:४५ | माछापुच्छ्रे FM | ९१ |
| चितवन | सोमबार ५:००–५:४० | कालिका FM | ९५.२ |
| धनगढी | सोमबार ५:३०–६:०० | दिनेश FM | ९३.८ |
| सुर्खेत | सोमबार ५:१५–५:४५ | रेडियो भेरी FM | ९८.६ |
| गोरखा | सोमबार ५:००–५:३० | रेडियो गोरखा FM | ९२.८ |
| भैरहवा | बिहीबार ५:००–५:४५ | रूपन्देही FM | १०२ |
| दाङ घोराही | बिहीबार ५:३०–६:०० | रेडियो मध्यपश्चिम FM | ९१.४ |
| पाल्पा | बिहीबार ५:००–५:३० | रेडियो मुक्तिनाथ FM | ९०.८ |
| सिन्धुली | बिहीबार ५:००–५:३० | सिन्धुलीगढी FM | १०३.६ |
| दाङ लमही | शुक्रबार ५:३०–६:०० | रेडियो देउखुरी FM | १०५.८ |
| पोखरा | बिहीबार ५:३०–६:०० | रेडियो सराङ्कोट FM | १०४.६ |
| दमौली | बिहीबार ५:२५–५:५५ | दमौली FM | ९४.२ |
| कोहलपुर | बिहीबार ५:३०–६:०० | कोहलपुर FM | १००.२ |
| चितवन | सोमबार ५:००–५:४० | त्रिवेणी FM | १००.६ |
| दमौली | बुधबार ५:०५–५:३५ | मादीसेती FM | १०५.८ |
| सल्यान | बिहीबार ५:००–५:३० | रेडियो सल्यान FM | १०१ |

# विज्ञान तिमी प्रेमको भाषा बोल अब

हरेक जन्म घचघच्याई चेतनस्वरूप जगाइदिने
मृगमरीचिकाबाट साक्षीभाव ब्यूँझाइदिने
परमात्माको उद्घोषलाई जसले सम्झाई बुझाइदियो
अनेक दृष्टि पन्छाएर परमदृष्टि खुलाइदियो
धन-दौलत, ऐश-आराम माटोसरी तुल्याइदियो
तेरो, मेरो, उसको, त्यसको तृण ठानी जलाइदियो
त्यही गुरुको चरणमा पर्न पाए पनि हुन्थ्यो
तिमी मेरो म तिम्रो भन्न पाए पनि हुन्थ्यो ।

फूललाई सोधेँ मैले, तिम्रो सौन्दर्य कसको आशीर्वाद हो
उसले भन्यो, गुरुको निम्ति चढ्न चाहने अभीप्साको प्रसाद हो ।
गुरु खोजेँ मैले पनि लगाई मन पलपल
पाएँ मैले गोरख निखिल जगतभरि झलमल
गुरु तिमी कति राम्रा आँखाबीच छाइदिने
मनको मझेरीमा आई हरदम मुस्कुराइदिने

चौरासी लाख योनिमध्ये उत्कृष्ट यो मानवयोनि
आफ्नो स्वरूप के हो भनी जान्न सकिने बनी मौनी
मैले पाएँ, अमरलोकको बाटो, साथ तिम्रो पाइदिँदा
हाँसी-हाँसी बाँच्न जानेँ पाद पूज्न पाइदिँदा
माटोको घडा हुँ म, रङ अहंकारको चढिएको
आफ्नै आकाश, घटाकाशलाई सर्वस्व ठानी लाडिएको
परीक्षाको प्रहारबाट टुट्न जानेँ जब मैले
गुरुरूपी महाकाशमा मिल्न पाएँ तब मैले ।

विज्ञान भन्छ कन्ट्र्याक्शन र एक्स्पान्शन भई ब्रह्माण्ड यो बनेको छ
गुरु ज्ञान सिकाउँदछ चैतन्यको आकुन्चन-प्राकुन्चनमा जगत् यो अडेको छ
विज्ञानको विद्यार्थी भई पढेँ इलेक्ट्रोन चल्छ, चल्मलाउँछ,
आकर्षण र विकर्षणको सिद्धान्तमा रम्छ, रमाउँछ ।
मैले जानेँ मन तिमी इलेक्ट्रोन सरी चन्चल छौ, चल्मलाउँछौ
राग-द्वेषको सिद्धान्तमा रम्छौ अनि रमाउँछौ ।
इलेक्ट्रोन चल्दा पनि न्युक्लियसभित्र प्रोटोन जसरी बसिदिन्छ अचल
मन चल्दा पनि आनन्दमय कोषभित्र आत्मा तिमी रहन्छौ अटल ।

चैतन्यको सत्ता यहाँ सर्वत्र कण-कणमा व्याप्त छ
जसरी इलेक्ट्रोन, प्रोटोनको सत्ता विज्ञानले सर्वत्र स्वीकार्दछ
इलेक्ट्रोनको संख्या थपघट हुँदा बन्छ पदार्थ जगत्मा थरिथरि
त्यस्तै, चैतन्यको मात्रा थपघट हुँदा जन्मन्छ जीव योनिहरूमा घरिघरि
गरी कम इलेक्ट्रोन सङ्ख्या बाहिरी कक्ष (सेल) हटाइदिँदा,
कक्षहरूको सङ्ख्या पनि घट्न जान्छ त्यसै गरी ।
गरी कम मनको गति बहिर्गमन हटाइदिँदा,
जन्म-मृत्युको चक्र पनि छुट्न जान्छ सोही गरी ।

प्रकाश जसरी देखिन्छ तरंग त बोक्दछ पदार्थ गुण पनि
गुरु तिमी निराकार भए पनि देखिन्छौ साकार रूपमा पनि
त्यसैले त गुरु तिमी प्रकाश नै हौ
निराशाको कालो बादल हटाइदिने आश हौ ।

$E=MC^2$, E बाट M बन्छ, सूत्र विज्ञान घोक्छ, घोकाउँछ
चैतन्यबाट नै जगत् बन्छ भनी अध्यात्म सिकाउँदछ ।
सूत्र होइन सद्विचार, सद्ज्ञान हामीलाई चाहिन्छ है
तन्त्र, मन्त्र, ध्यान योगबाट नै यो पाइन्छ है ।
गुरु तिमी कति प्यारा हामीलाई यी सब बताइदिने
कण-कणमा व्याप्त अनुभव-आनन्दको स्रोत खुलाइदिने ।

विज्ञान तिमी अहंकारको भाषा छोडी प्रेमको भाषा बोल अब
अध्यात्मको साथ लिई शान्ति आनन्दको मूल खोल अब
विज्ञान र ज्ञानको मिलन आजको युगको आवश्यकता हो ।
गुरु-शिष्य मिलन नै वास्तविक पुरुषार्थ हो ।
पिण्ड ब्रह्माण्डमा मिल्ने यही एक गूढार्थ हो ।
विन्दु सिन्धुमा मिल्नु यही एक परमार्थ हो ।
जय गुरुदेव !

–मुकेश धिताल
म्हैपी, काठमाडौँ

# उष्ट्रासन

'गोरक्ष निखिल वाणी'का आदरणीय पाठकहरूसमक्ष विभिन्न प्रकारका उत्कृष्ट उपलब्धि प्रदान गर्ने आसनहरूको बारेमा जानकारी दिने प्रयास गरिरहेका छौँ । यसै क्रममा यस अङ्कमा पनि सरल, सजिलो तथा अत्यन्तै महत्त्वपूर्ण आसन 'उष्ट्रासन'को बारेमा जानकारी दिने जमर्को गरेका छौँ । मानव जातिले आफ्नो अमूल्य जीवनलाई हरेक पक्षबाट सफलीभूत बनाउँदै आफ्नो लक्ष्य प्राप्तिको लागि नगरी नहुने अभ्यास नै योगाभ्यास हो । आध्यात्मिकरूपबाट अघि बढ्नको लागि विभिन्न धर्म, संघ-सम्प्रदायले विविध मार्गहरू देखाए पनि ती सम्पूर्ण धर्म, संघ, संस्था र सम्प्रदायहरूको वास्तविक व्यावहारिक रूप नै योग हो । आध्यात्मिक ज्ञान, सिद्धि र दिव्यशक्ति प्राप्तिको लागि साधनात्मकरूपमा अगाडि बढ्न चाहने साधक साधिकाहरूले अपनाउनु नै पर्ने महत्त्वपूर्ण विधा नै योग हो ।

योगाभ्यासबाट नै व्यक्तिभित्र भएका विभिन्न किसिमका शारीरिक, मानसिक रोग, भोग, शोकजस्ता समस्याहरू निराकरण हुँदै आध्यात्मिक उच्चता प्राप्त हुन्छ । आध्यात्मिकरूपमा अगाडि बढ्नको लागि विभिन्न आधारभूत अवस्थाहरू सबल र सक्षम हुनु अत्यन्त जरुरी हुन्छ जुन विषयवस्तुहरूको अभावमा हामीहरू सही तरीकाले अगाडि बढ्न सक्दैनौं । हाम्रो शरीर स्वस्थ, निरोगी र पुष्ट नभएसम्म हामी आध्यात्मिक मार्गमा अघि बढ्न सक्दैनौँ किनकि रोगग्रस्त शरीरबाट कार्य गर्न असम्भवप्रायः हुन जान्छ । चिन्तन, मनन, ध्यान र मानसिक संवेदनाहरू नै उसको शारीरिक समस्यामा केन्द्रित हुने हुँदा साधनात्मक मार्गमा विघ्न, बाधा पुग्न जान्छ, साथै व्यक्तिका सम्पूर्ण आन्तरिक ऊर्जाहरू मानसिकरूपमा क्षय हुने हुँदा मानस शक्तिहरू पनि शिथिल र निष्क्रिय हुन जान्छन् ।

हाम्रो अर्को शक्तिशाली पक्ष मन पनि त्यत्तिकै शान्त र स्थिर हुनुपर्दछ । अत्यन्त चञ्चल र अस्थिर मानसिक अवस्थाबाट पनि साधनात्मकरूपबाट अघि बढ्न असम्भव र गाह्रो हुन्छ । हाम्रा हरेक धर्मशास्त्र, विभिन्न पुराण, उपनिषद् र संहिताहरूको सार नै योग भएको पुष्टि गरेका छन् किनकि योगभित्र हाम्रो शरीर, मन र आत्माको हरेक अवस्थालाई परिमार्जित र परिस्कृत गर्दै परमात्मा प्राप्तिका लागि योग्य र सक्षम बनाउन सक्ने अथाह शक्ति लुकेको पाइन्छ । यी विषयवस्तुलाई प्रयोगात्मकरूपमा आफ्नो जीवनमा ल्याई ती अलौकिक अनुभूतिहरू स्वस्थ शरीर, शान्त मनबाट प्राप्त हुने त्यो दिव्य शान्ति र आनन्द थोरै समयको अभ्यासमा पनि प्राप्त गर्न सकिन्छ । यिनै महत्त्वपूर्ण आसनहरूमध्ये मानिसको आरोग्य स्थापनामा महत्त्वपूर्ण भूमिका खेल्ने उष्ट्रासनको बारेमा तल प्रस्तुत गरिएको छ ।

## आसन गर्ने विधिः-

- सर्वप्रथम वज्रासनमा बस्ने ।
- दुवै गोडा र घुँडाको बीचमा केही दूरी हुने गरी समानान्तररूपले फट्याउने ।
- घुँडा र पैतालाको माथिल्लो भागको सहाराले घुँडाभन्दा माथिको शरीरको भागलाई सीधा रेखामा उभ्याउने ।
- बिस्तारै श्वास तानेर दायाँ हातलाई माथि उठाउने र त्यस हातलाई पछाडि लग्दै बिस्तारै दायाँ गोडाको कुर्कुच्चा समाउने । त्यसैगरी बायाँ हातलाई माथि उठाउने र पछाडि लग्दै बायाँ गोडाको कुर्कुच्चा समाउने ।
- यस अवस्थामा श्वासलाई भित्र नै रोक्नुपर्दछ । कम्मर र घुँडादेखि नितम्बसम्मको भाग अनि पेटको तल्लो भागदेखि छाती सीधा हुनुपर्दछ । उष्ट्रासनको क्रममा अनुहारलाई आकाशतर्फ फर्काएर राख्न सके बढी लाभदायक हुन्छ ।
- यसपछि श्वास लिने र ठूलो आवाज आउने गरी छोड्ने गर्नुपर्दछ । यस क्रमलाई सात-आठपटक दोहोऱ्याउन सकिन्छ ।
- पुनः बिस्तारै दायाँ हातलाई माथि उठाउने र अगाडि ल्याउने, त्यसैगरी बायाँ हातलाई पनि माथि उठाउँदै अगाडि ल्याउने र पहिलेको अवस्थामा नै बस्ने ।
- माथिको क्रमलाई दोहोऱ्याउँदै यस आसनको अभ्यास बढाउन सकिन्छ ।

## उष्ट्रासनबाट लाभः-

- उष्ट्रासन पद्धतिलाई नित्य अभ्यास गर्ने हो भने यसबाट धेरै लाभ लिन सकिन्छ । रुघाखोकी, टन्सिलजस्ता व्याधि यस आसनबाट शीघ्र नष्ट हुन्छन् ।
- उष्ट्रासनबाट गलासम्बन्धी रोगहरू पनि भगाउन सकिन्छ । स्वरलाई मीठो तथा सुमधुर पार्न यो आसन अत्युत्तम छ । त्यसैले गायन, वाचन क्षेत्रमा लागेकाहरूले यसलाई नित्य अपनाउँदा उनीहरूको स्वरको मिठासमा अझ मधुरता ल्याउन सहायक हुन्छ ।
- जसलाई फियो र कलेजो सुन्निने रोग हुन्छ, उसले पनि यस आसन विधिलाई नियमितरूपमा अपनाउने हो भने यस्ता समस्याहरूबाट तुरुन्तै मुक्ति पाउन सक्दछ ।
- यस आसनबाट व्यक्तिको ऊर्जामा तीव्रता आउँछ जसबाट काम वासनादि नियन्त्रण गर्न सरल तथा सुगम हुन जान्छ । यहाँ एउटा स्मरणीय कुरा के छ भने उष्ट्रासनका साधकहरूले जलनेति वा सूत्रनेतिमध्ये कुनै एकलाई यस आसन सँगसँगै अपनाउन सकेमा स्वरको मिठास बढाउन थप सहायक सिद्ध हुनेछ । जय गुरुदेव !

## २०६६ मङ्सिर महिनामा पर्ने चाडपर्व

| | |
|---|---|
| मङ्सिर १ गते | **श्री शिव गोरक्ष हवन** |
| मङ्सिर २ गते | **तान्त्रोक्त वटुक भैरव हवन, तान्त्रोक्त गणपति हवन** |
| मङ्सिर ३ गते | **तान्त्रोक्त महालक्ष्मी हवन, तान्त्रोक्त विन्ध्यवासिनी हवन** |
| मङ्सिर ४ गते | **तान्त्रोक्त बगलामुखी हवन, तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| मङ्सिर ६ गते | **दिव्य गुरु महोत्सव**, विवाहपञ्चमी |
| मङ्सिर १० गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| मङ्सिर १३ गते | मोक्षदा एकादशी |
| मङ्सिर १४ गते | प्रदोषव्रत |
| मङ्सिर १६ गते | दत्तात्रेय जयन्ती |
| मङ्सिर १७ गते | धान्यपूर्णिमा, योमरीपुन्हि |
| मङ्सिर २४ गते | अष्टमीव्रत, गोरखकाली पूजा |
| मङ्सिर २७ गते | सफला एकादशी |
| मङ्सिर २८ गते | प्रदोषव्रत |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरु पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

## हार्दिक श्रद्धाञ्जलि

**२०५४ माघ १** **२०६६ आश्विन २४**

**स्व. सुशील भण्डारी**

यस विद्याश्रममा कक्षा ७ मा अध्ययनरत छात्र सुशिल भण्डारीको असामयिक निधन भएकोमा हामी दुःखित भएका छौँ । यस दुःखद घडीमा मृतकको परिवारजनमा धैर्यधारण गर्न सक्ने शक्ति प्राप्त होस् भन्ने कामना गर्दै समवेदना व्यक्त गर्दछौँ साथै मृतात्माको चिर शान्तिको लागि परमपूज्य सद्गुरुदेवहरूको चरणकमलमा प्रार्थना गर्दछौँ ।

**गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम परिवार**

# अग्र्य संग्रह
## कुन चीज केमा श्रेष्ठ ?

गोरक्ष निखिल वाणीको यस अंकमा आयुर्वेदको प्रमुख ग्रन्थहरूमध्ये एक अष्टाङ्ग संग्रहमा उल्लेख गरिएको अग्रच संग्रह अर्थात् कुन रोगको लागि कुन औषधि श्रेष्ठ हुन्छ भन्ने विवरणसम्बन्धी चर्चा गर्न गइरहेका छौँ । आत्रेय आदि महर्षिहरूले वर्णन गर्नुभएको उक्त संग्रह हाम्रो व्यावहारिक जीवनमा अत्यन्त लाभदायक हुनसक्छ ।

१. ज्वरनाशक मध्येमा उपवास उत्तम हुन्छ ।
२. जीवनीय द्रव्यहरूमा दूध श्रेष्ठ हुन्छ ।
३. थकाइ मेटाउनमा स्नान र सुरा श्रेष्ठ हुन्छ ।
४. वय:स्थापन (सधैं निरोगी, जवान रहन) का लागि अमला श्रेष्ठ हुन्छ ।
५. प्रीणन द्रव्यहरूमा फलको रस उत्तम हुन्छ ।
६. अन्न-द्रव्य रुची गराउनेमा लवण श्रेष्ठ हुन्छ ।
७. हृद्य अर्थात् हृदयलाई हित गर्ने द्रव्यहरूमा अम्ल रस उत्तम हुन्छ ।
८. वात-कफशामक द्रव्यहरूमा तेल श्रेष्ठ हुन्छ ।
९. वात-पित्तशामक द्रव्यहरूमा घृत उत्तम हुन्छ ।
१०. कफ-पित्तशामक द्रव्यहरूमा मह उत्तम हुन्छ ।
११. मृदुता अर्थात् शरीर कोमल गराउने मध्येमा स्वेदन (पसिना निकाल्ने) कार्य उत्तम हुन्छ ।
१२. शरीरमा स्थिरता ल्याउने कार्यहरूमा व्यायाम श्रेष्ठ हुन्छ ।
१३. पुंसत्व (रतिशक्ति) हानि गर्ने द्रव्यहरूमा क्षार श्रेष्ठ हुन्छ ।
१४. कण्ठ (स्वर) लाई हानी गर्ने द्रव्यहरूमा काँचो गहत श्रेष्ठ हुन्छ ।
१५. निद्राकारक द्रव्यहरूमा भैँसीको दूध श्रेष्ठ हुन्छ ।
१६. अभिष्यन्दी अर्थात् स्रोतहरूमा अवरोध उत्पन्न गर्ने द्रव्यहरूमा मन्दक दही उत्तम हुन्छ ।
१७. मूत्रल अर्थात् पिसाब लगाउने द्रव्यहरूमा ऊखुको रस उत्तम हुन्छ ।
१८. आश्वासन, स्तम्भन एवं क्लेदन गर्नेहरूमा जल श्रेष्ठ हुन्छ ।
१९. छर्दि अर्थात् वमन एवं तृष्णाको अतियोग शमन गर्नका लागि तताएर रातो पारेको माटोको डल्ला ड्वाइँ पारेको पानी श्रेष्ठ हुन्छ ।
२०. वमन नाशकमा लावा श्रेष्ठ हुन्छ ।
२१. ग्रहणी रोगमा तक्र (मोही) सेवन श्रेष्ठ हुन्छ ।
२२. दीपन, पाचन र संग्राही द्रव्यमा मुस्ता श्रेष्ठ हुन्छ ।
२३. संग्राही, पाचन एवं सबै दोष नाशकमा अतिविषा श्रेष्ठ हुन्छ ।
२४. संग्रही, दीपन एवं वातकफशामकमा बिल्व उत्तम मानिन्छ ।
२५. विद्रधि, विसर्प, पिडका एवं गण्डमालानाशकमा रक्तमोक्षण (विशेष जातिको जुकाले टोकाएर रगत निकाल्ने क्रिया) उत्तम हुन्छ ।
२६. गुल्म एवं वातनाशकमा लसुन श्रेष्ठ हुन्छ ।
२७. कृमीनाशकमा विडंग श्रेष्ठ हुन्छ ।
२८. प्रमेह रोग नाशकमा हरिद्रा श्रेष्ठ हुन्छ ।
२९. वृद्धि (अण्डवृद्धि वा आन्त्रवृद्धि), गुल्म, वात एवं शूलनाशकमा एरण्ड तेलको सेवन गर्ने गर्नु उत्तम हुन्छ ।
३०. वृष्य (वीर्यवर्धक) र सर्वदोषहरमा शालपर्णी श्रेष्ठ हुन्छ ।
३१. मेद एवं वातनाशकमा गुग्गुल श्रेष्ठ हुन्छ ।
३२. वमन द्रव्यहरूमा श्रेष्ठ मदनफल हुन्छ ।
३३. विषनाशक द्रव्यहरूमा शिरीष उत्तम हुन्छ ।
३४. सुखविरेचकमा त्रिवृत् श्रेष्ठ हुन्छ ।
३५. मृदुविरेचकमध्येमा राजवृक्ष श्रेष्ठ हुन्छ ।
३६. तीक्ष्णविरेचकमा सिउँडीको दूध श्रेष्ठ हुन्छ ।

३७. चक्षुष्य (आँखाको लागि हितकर), केश्य, कण्ठ्य (स्वर राम्रो बनाउन), वर्ण्य, विरंजनीय एवं रोपणमध्ये यष्टीमधु प्रमुख हुन्छ ।
३८. पथ्यमा हर्रो श्रेष्ठ हुन्छ ।
३९. रसायनमा दूध र घ्यू सेवन गर्ने अभ्यास उत्तम हुन्छ ।
४०. दाहशामक लेपमा चन्दन र उदुम्बरको लेप श्रेष्ठ हुन्छ ।
४१. दाँतहरू बलियो बनाउन र रुचिकारकामा तेलको कुल्ला गर्ने अभ्यास श्रेष्ठ हुन्छ ।
४२. शीतनाशक प्रलेपहरूमा रास्ना र अगुरुको लेप श्रेष्ठ मानिन्छ ।
४३. दाह, त्वक्रोग एवं स्वेद नाशकमा सुगन्धवाल र उशीरको प्रलेप श्रेष्ठ मानिन्छ ।
४४. मूत्रकृच्छ्र (पिसाब फेर्न कठिनता) मा गोक्षुर श्रेष्ठ हुन्छ ।
४५. क्षत (उर:क्षत) नाशक मध्येमा लाक्षा श्रेष्ठ हुन्छ ।
४६. क्षय एवं क्षतनाशकमा नागबलाको निरन्तर सेवन श्रेष्ठ हुन्छ ।
४७. हिक्का, श्वास, कास तथा पर्श्वशूलनाशक मध्येमा पुष्करमूल श्रेष्ठ हुन्छ ।
४८. कासशामक मध्येमा कण्टकारी श्रेष्ठ हुन्छ ।
४९. रक्तपित्तशामक मध्येमा वासा श्रेष्ठ हुन्छ ।
५०. शोषनाशक, स्तन्यवर्धक, रक्तरोधक एवं रक्तशामकमा बाख्राको दूध श्रेष्ठ हुन्छ ।
५१. पुरीष बढाउने द्रव्यहरूमा जौबाट निर्मित आहार श्रेष्ठ हुन्छ ।

जय गुरुदेव !

प्रेरक-प्रसंग

# परमात्माको साकार निराकार स्वरूप

एकदिन एक शिष्यले आफ्ना गुरुसँग यस्तो जिज्ञासा राखे– 'हजूर मेरा गुरुदेव हुनुहुन्छ, हजूरले स्वर्गको कैयौंपटक यात्रा गरिसक्नुभएको छ । स्वर्गसम्बन्धी हजूरको अनुभव कस्तो छ ? त्यहाँ हजूरले देख्नुभएका कुराको बारेमा कृपापूर्वक मलाई पनि बताउनुहोस् ।' गुरुले शिष्यको कुरालाई टार्दै रहनुभयो तर शिष्यले भने गुरुसँग बारम्बार प्रार्थना गर्दै रहे । एकदिन गुरुले स्वर्गको बारेमा आफ्नो अनुभवलाई शिष्यलाई बताउनुभयो ।

उहाँले भन्नुभयो– 'म जब त्यहाँ गएँ मैले देखें कि एकदिन स्वर्गको बाटोमा विशाल धार्मिक जुलुस गइरहेको थियो र त्यसको बीचबाट एउटा सुन्दर सुसज्जित घोडामा नग्न मानिस बसेका थिए, उनको अनुहार यतिविघ्न आभावान् थियो कि मैले उनको बारेमा जिज्ञासा राख्नबाट आफूलाई रोक्न सकिनँ । मैले नाचिरहेका एक व्यक्तिलाई 'यी महान् व्यक्ति को हुन् ?' भनेर सोधें । उनले आश्चर्यपूर्वक मलाई हेरेर भने कि यिनी भगवान् महावीर हुन् ।

केही पर पुगेपछि मैले अर्को जुलुस देखें । त्यसमा पनि मानिसहरू नृत्य गरिरहेका देखिन्थे र घोडामा एक सुन्दर व्यक्ति बसेका थिए । उनी पूर्ण शान्त थिए । मैले देख्दैमा चिनें– उनी जिसस क्राइष्ट थिए ।

अगाडि बढेपछि पुन: अर्को एउटा जुलुस देखें जुन जुलुसको बीचमा पैगम्बर मोहम्द साहब देखिन्थे ।

त्यस्तैगरी अर्को जुलुस पनि देखियो जसमा बुद्धलाई देखें । यसप्रकार बाटामा कुनै न कुनै जुलुस गइरहेको थियो ।

अन्तमा अत्यन्तै विशाल जुलुस गइरहेको देखें । त्यस जुलुसमा मानिसहरूको ताँती पनि लामो थियो । जुलुसको बीचमा हिँडिरहेको घोडालाई पनि विशेष सजाइएको थियो । तर सबैभन्दा आश्चर्य त यो थियो कि त्यस घोडामा कोही पनि सवार थिएन । तर पनि जुलुस अत्यन्तै विशाल थियो, उत्साह ज्यादा थियो । मैले उत्सुकतावश सोधें, 'तपाईंहरू सबै नाचिरहनुभएको छ, उत्साह उमंग ज्यादा छ तर घोडामा त कोही पनि बस्नुभएको छैन नि ?' एकजना मानिसले भने, 'उहाँलाई चिन्नुहुन्न ? उहाँ निराकार परमपिता परमात्मा हुनुहुन्छ जो हर समय, हर स्थितिमा रहनुहुन्छ र उहाँको रूप-रंगबारे कसैले वर्णन गर्न सक्दैन ।'

वास्तवमा संसारमा परमात्मा एक नै हुनुहुन्छ, समय समयमा अवतरित महापुरुषहरू त्यस परमात्माका नै स्वरूप हुनुहुन्छ ।

# मानवले मानवलाई शोषण गर्ने, अन्याय अत्याचार गर्ने कार्य निन्दनीय कार्य भएको हुँदा नागरिक अधिकारप्रति सजग र सचेत बनौं र बनाऔं ।

# सिद्धाश्रम शक्ति केन्द्र

# सम्पर्क कार्यालय लगनखेल, ललितपुर

परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ तथा परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको महान् योजनालाई आत्मसात् गर्दै, उहाँहरूकै योजनालाई मूर्त रूप दिनको लागि वि.सं. २०६० कार्तिक ५ गते ललितपुर सम्पर्क कार्यालयको स्थापना भएको थियो । यो सम्पर्क कार्यालय हाललाई ललितपुर, लगनखेलमा रहेको प्रसिद्ध वटुक भैरव मन्दिरको पूर्वमा रहेको छ ।

स्थापनाकालमा प्रत्येक दिन दिउँसो ३:०० बजेदेखि खुल्दै आएको यो सम्पर्क कार्यालय हाल प्रत्येक दिन २:३० बजेदेखि खुल्दै आएको छ । यस सम्पर्क कार्यालयमा स्थापनाकालदेखि साँझ ५:०० बजेको नित्य गुरु आरती, वि.सं. २०६० मंसिर ११ देखि बृहस्पतिबारको गुरु पूजन र वि.सं. २०६० माघ ७ देखि दिव्य गुरु महोत्सव नियमितरूपमा सञ्चालन हुँदै आएका छन् । यस्तै महाप्रयाण दिवस, गुरुमाता जन्मदिवसलगायत विभिन्न चाडपर्व एवं अवसरहरूमा मन्त्रजप, पूजन, हवन, भजनकीर्तन आदिजस्ता कार्यक्रमहरू पनि यस सम्पर्क कार्यालयमा सञ्चालन हुँदै आएका छन् जुन कार्यक्रममा भाग लिएर हजारौं व्यक्तिहरूले आध्यात्मिक र भौतिक दुवै लाभ प्राप्त गरिसकेका छन् ।

'साधनात्मक आँधीबेहरी ल्याऔं, गोरक्ष निखिल शक्ति जगाऔं', 'तान्त्रिक साधना तान्त्रिक ध्यान, मानव जीवनको वास्तविक ज्ञान' आदिजस्ता नारालाई लिएर अगाडि बढिरहेको यस सम्पर्क कार्यालयमा सद्‌गुरुदेवहरूको आशीर्वादस्वरूप हालसम्म वटुक भैरव, गोरखकाली, भुवनेश्वरी, अन्नपूर्ण, शिव, कृष्ण, मनकामना, महालक्ष्मी, सूर्य, गायत्री, शिव (दोस्रोपटक), बसुन्धरा, शनि, गणपति, मनकामना (दोस्रोपटक), दक्षिणकाली र अन्नपूर्ण (दोस्रोपटक) गरी १७ वटा साधनाहरू सम्पन्न भइसकेका छन् । वि.सं. २०६१ देखि हालसम्म प्रारम्भिक ध्यान साधनाका कक्षाहरू ५ वटा समूहमा सञ्चालन भइसकेका छन् । यस्तै भैरव/भैरवी ध्यान पनि यस आश्रममा सञ्चालन भइसकेको छ । विभिन्न रोगको उपचारको लागि गरिने उपचार पद्धति 'हिलिङ' को सुविधा पनि यहाँ उपलब्ध हुने गरेको छ ।

यस आश्रमअन्तर्गत हालसम्म गोदावरी र धापाखेलमा गरी २ वटा आरती सञ्चालन केन्द्रहरू रहेका छन् । गोदावरी आ.स.के.को स्थापना २०६३ श्रावण ४ गते भएको थियो भने धापाखेल आ.स.के.को स्थापना २०६५ फाल्गुण १३ गते भएको थियो । हाल गोदावरी आ.स.के. प्रस्तावित सम्पर्क कार्यालयको रूपमा परिणत भइसकेको छ ।

ललितपुर जिल्लामा सिद्धाश्रम शक्ति केन्द्रद्वारा आयोजित मासिक हवन कार्यक्रममा ललितपुर सम्पर्क कार्यालयले आफ्नो उल्लेखनीय भूमिका निभाउँदै आएको छ । यस्तै प्रत्येक मंगलबार वटुक भैरव मन्दिर क्षेत्रको र मासिक हवनको लागि वटुक भैरव र महालक्ष्मी मन्दिर क्षेत्रको सरसफाइ गर्ने काम यस सम्पर्क कार्यालयले नियमितरूपमा गर्दै आएको छ ।

आश्रम विस्तारको लागि गरिने प्रचारप्रसार कार्यक्रमअन्तर्गत यस सम्पर्क कार्यालयले पनि विभिन्न कार्यक्रमहरू सञ्चालन गर्दै आएको छ । पत्रिका सदस्य विस्तारको क्रममा हालसम्म गो.नि.वा. पत्रिकाको सदस्यता जारी गर्ने, नवीकरण गर्ने र सदस्यहरूलाई पत्रिका वितरण गर्ने कार्य गर्दै आएको छ । यस्तै आश्रमले विभिन्न चाडपर्व एवं अवसरहरूमा धापाखेल, पाटन, लुभु, आदिजस्ता विभिन्न ठाउँहरूमा भजनकीर्तन, देउसीभैलो आदि कार्यक्रमहरू सञ्चालन गर्दै आएको छ ।

ललितपुर सम्पर्क कार्यालयमा गुरुलाई सबैथोक मानी गुरुको लागि प्राणसमेत अर्पण गर्न तयार भई गुरुकार्य गर्ने तालिमप्राप्त कार्यकर्ताहरूको संख्या १२९ रहेको छ । यसप्रकार ललितपुर सम्पर्क कार्यालयका गतिविधिहरू अगाडि बढिरहेका छन् । जय गुरुदेव ।

## हवन कार्यक्रम

परमपूज्य सद्गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले प्रत्येक महिनाको पहिलो हप्ता विभिन्न बारहरूमा विभिन्न मन्दिर तथा शक्तिपीठहरूमा सम्पन्न गर्दै आइरहेको मासिक हवन कार्यक्रमहरूलाई गत कार्तिक महिनामा पनि निरन्तरता दियो। हवन कार्यक्रमअन्तर्गत कार्तिक २ गते सोमवार श्री शिव गोरक्ष हवन कार्यक्रम पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर प्रांगणमा, कार्तिक ३ गते मंगलवार तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा, कार्तिक ४ गते बुधवारतान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा तथा कार्तिक ५ गते बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम पाटन कुम्भेश्वरस्थित बगलामुखी मन्दिर प्रांगणमा सम्पन्न भयो। उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म तथा अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो।

यस्तै मासिक हवनकै शृङ्खलामा सम्पर्क कार्यालय रामघाट पोखराको आयोजनामा गत कार्तिक ४ गते बुधवार स्थानीय विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो भने सम्पर्क कार्यालय तनहुँको आयोजनामा कार्तिक ५ गते बिहीबार स्थानीय वेद व्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो भने सम्पर्क कार्यालय भक्तपुरले पनि गत कार्तिक ३ गते मंगलबार सूर्यविनायक मन्दिर प्रांगणमा तान्त्रोक्त गणपति हवन सम्पन्न गर्‍यो।

## दिव्य गुरु महोत्सव

परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यूको रूपमा परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको धरतीमा अवतरणको पावन दिनको स्मरणस्वरूप प्रत्येक अंग्रेजी महिनाको २१ तारीखलाई दिव्य गुरु महोत्सवको रूपमा मनाउने क्रममा गत कार्तिक ४ गते सिद्धाश्रम शक्ति केन्द्रले यस महोत्सवलाई भव्यताका साथ मनायो।

काठमाडौंको जैन भवनमा आयोजित उक्त महोत्सव बिहान १० :३० मा स्तुति-वन्दना, निखिल स्तवनको सस्वर पाठसँगै शुभारम्भ भएको थियो। महोत्सवमा गुरु पादुका पूजन, मन्त्रजप, हवन, आरती, भजन-कीर्तन र नृत्यका कार्यक्रम सम्पन्न भएका थिए। दिव्य गुरु महोत्सवमा सद्गुरुदेवहरूको श्रीचरणकमलमा लाख बत्ती पनि अर्पण गरिएको थियो। उक्त अवसरमा साधिका सृजना बस्नेत, साधिका राज्यलक्ष्मी बस्नेत, साधक विशाल बस्नेत तथा साधिका मैया गौतमले दिव्य पादुका पूजन गर्ने सौभाग्य पाउनुभएको थियो।

महोत्सवको दोस्रो चरणमा गुरुसेवा दल नं. ४३ का सदस्य साधक मदनलाल श्रेष्ठले उपस्थित सबैलाई संस्थाको तर्फबाट स्वागत गर्नुभएको थियो। दोस्रो चरणको कार्यक्रममा भजन-कीर्तन, नृत्य सम्पन्न हुनुका साथै सावरपन्थी सदस्यज्यूहरूले स्ववचनमार्फत उपस्थितहरूको ज्ञानको तृष्णालाई शान्त पार्नुभएको थियो। उक्त अवसरमा सावरपन्थी सदस्य नं. २ ज्यूले आध्यात्मिक युगका लागि समर्पित कार्यकर्ताहरूको खाँचोलाई औंल्याउनुभयो। उहाँले गुरुदेवहरू सिद्धि, शक्ति, क्षमता आफ्ना कार्यकर्ताहरूलाई दिन तयार हुनुहुन्छ तर लिन हामी तयार हुनुपर्नेतर्फ पनि संकेत गर्नुभयो। कार्यक्रममा सावरपन्थी सदस्य नं. १ ज्यूले विशेष ध्यान प्रदान गर्नुभएको थियो।

कार्यक्रमको अवसरमा हालै गुरु सेवा दलमा प्रवेश गर्नुभएका कार्यकर्ताहरूलाई हरियो पोशाक प्रदान गरिएको थियो। सावर पन्थी सदस्य १ र २ ज्यूबाट हस्तान्तरित गुरुसेवा दलको पोशाक प्राप्त गर्नेहरूमा विजय शाही, आरती सुनुवार, गोकुल लिम्बू, भगवान् पाण्डे, सुमित्रा सिलवाल, महेन्द्रकुमारी राई, मनोहर अधिकारी, गीता के.सी., उमा ढकाल, दशरथ थापा र रामगोपाल फैजू हुनुहुन्थ्यो।

## अब गोदावरी र सिरुटार प्र.स.का.

ललितपुरको गोदावरी तथा भक्तपुरको सिरुटारमा आरती सञ्चालन केन्द्रको रूपमा रहेका सिद्धाश्रम शक्ति केन्द्रका एकाईहरू अब प्रस्तावित सम्पर्क कार्यालयको रूपमा विकसित भएका छन्। विभिन्न आरती सञ्चालन केन्द्रहरूमा सावर पन्थी सदस्यज्यूहरूको भ्रमणपश्चात् गत कार्तिक १३ गतेबाट यी दुवै स्थानका एकाइहरू एकै साथ प्रस्तावित सम्पर्क कार्यालय बनेका हुन्।

## सम्पर्क कार्यालय १९ पुग्यो

गत आश्विन ३० गतेका दिनदेखि काठमाडौंको सिमलटारमा रहेको सिद्धाश्रम शक्ति केन्द्रको आश्रम सम्पर्क कार्यालयको रूपमा रूपान्तरित भएको छ। केही महिना अघि मात्र प्रस्तावित सम्पर्क कार्यालय बनेको उक्त आश्रम यति छोटो अवधिमा नै फड्को मार्न सफल भएको हो। सिमलटार सम्पर्क कार्यालयको प्रवेश सँगसँगै अब सिद्धाश्रम शक्ति केन्द्रको हालसम्मको सम्पर्क कार्यालय संख्या १९ पुगेको छ।

## आ. उ. ने. तहको तालिम

सिद्धाश्रम शक्ति केन्द्रले गत कार्तिक २० र २१ गते आध्यात्मिक उप-नेतृत्वकर्ताहरूका लागि बाह्रौं तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो। काठमाडौंको कमलपोखरीस्थित अग्रवाल भवनमा आयोजित दुई दिवसीय उक्त तालिम तथा प्रशिक्षण कार्यक्रम दुवै दिन बिहान १० बजे सद्गुरुदेवहरूको स्तुति वन्दना-प्रार्थनाबाट शुरु भई साँझको नित्य आरतीपछि टुंगिएको थियो। उक्त अवसरमा गुरु पादुका पूजनको सौभाग्य पाउनेहरूमा जुलुम श्रेष्ठ, प्रजुला श्रेष्ठ, बनु श्रेष्ठ, अजनवी सुनुवार, शेखर पौडेल, विन्दु देवकोटा, मोहनदेवी डंगोल, शोभा पौडेल, ज्योति शाही, सुप्रभा नकर्मी र लक्ष्मी तिवारी हुनुहुन्थ्यो।

कार्यक्रममा आध्यात्मिक इमान्दारिता, आ.उ.ने. तह, सि.श.के. नेपाल, अ.ना.प. कार्यशैली आदि विषयमा प्रशिक्षण दिइएको थियो। उक्त अवसरमा विशेष ध्यान पनि प्रशिक्षार्थीहरूले प्राप्त गर्नुभएको थियो। कार्यक्रममा काठमाडौं, ललितपुर, भक्तपुर, सिन्धुली, गोरखा, तनहुँ, कास्की, लमजुङ्ग, पाल्पा, बाह्रबिसे, चितवनलगायत जिल्लाबाट आउनुभएका १०९ प्रशिक्षार्थीहरूको सहभागिता रहेको थियो। कार्यक्रमको अन्तमा सुनाइएको ग्रेडिङ्गअनुसार आध्यात्मिक उपनेतृत्वकर्ता तहबाट विकसित भएर आध्यात्मिक सहनेतृत्वकर्ता तहमा ३३ जना प्रशिक्षार्थीहरू पदोन्नत हुनुभएको थियो।

## बैंगलोरमा आश्रम स्थापना

परमपूज्य सद्गुरुदेवहरूको महान् योजनालाई अन्तर ाष्ट्रियरूपमा पनि विस्तार गर्नको लागि भारतको बैंगलोरमा आश्रमको स्थापना भएको छ। हाल त्यहाँ दैनिक आरतीको साथै सावर पन्थी नं. ३ का सदस्यज्यूबाट परामर्श सेवा सञ्चालन भइरहेको छ भने आगामी दिनहरूमा यसले अझ विस्तारित रूप लिने आशा पनि गरिएको छ।

## देउसी-भैलो कार्यक्रम

तिहारको अवसरमा सिद्धाश्रम शक्ति केन्द्रले संस्कृति जगेर्नाहेतु प्रत्येक वर्ष खेलिँदै आएको देउसी-भैलो कार्यक्रमलाई विभिन्न साधक-साधिकाहरू एवं शुभेच्छुकहरूको घर-आँगनमा अनुशासित तथा आध्यात्मिक भावभूमिमा रही यसपटक पनि निरन्तरता दिएको छ।

देउसी-भैलो कार्यक्रमलाई संस्थाका कास्की, चितवन, गोरखा, लमजुङ, तनहुँ, सिन्धुपाल्चोक, सिन्धुली, काठमाडौं, भक्तपुर, ललितपुर, काभ्रे जिल्लामा रहेका विभिन्न सम्पर्क कार्यालय, प्रस्तावित सम्पर्क कार्यालय र आरती संचालन केन्द्रहरूले सम्पन्न गरेका थिए।

## मनकामना साधना सम्पन्न

सामुन्ने गुरु यन्त्र, मनकामना यन्त्र, मनोइच्छा पूर्ण गुटीकालाई पहेँलो यन्त्रासनमा राखेर आँखा बन्द गरेर पहेँलै आसनमा बसेर माला जपिरहेका थिए सयौं साधक-साधिकाहरू। गुरु चादर ओढी मेरुदण्ड सीधा राखेर मन्त्र जपमा व्यस्त साधक-साधिकाहरूले मन्त्र जपपश्चात् मनोइच्छा पूर्ण गुटीकालाई दायाँ मुठ्ठीमा कसेर नाभिनिर लगेर करिब पाँच मिनेटसम्म ध्यान गरेर बस्दाको क्षणमा यस्तो अनुभव भइरहेको थियो– धरतीमा ऋषिहरूको आगमन भएको छ, ऋषियुग आएको छ। रामायण, महाभारत र अन्य शास्त्रमा वर्णित दिव्य युगको झलक देखिएको थियो त्यस क्षण। वातावरणमा दिव्यानन्द, प्रशान्ति थियो, मनमा त्यस्तै प्रसन्नता थियो सबैको। मन्त्र-तन्त्र-यन्त्र विज्ञानबाट विश्वमा शान्ति र आध्यात्मिक शीतलता छर्ने कार्यमा अगुवाइ गरिरहेको आध्यात्मिक संस्था सिद्धाश्रम शक्ति केन्द्रले गत कार्तिक २८ गते आयोजना गरेको मनकामना साधना शिविरको दिव्य क्षण थियो त्यो।

काठमाडौंको गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा सम्पन्न उक्त साधना शिविरका सहभागीहरूमा ८२ वर्षका वयोवृद्धदेखि लिएर कलिला साधक साधिकाहरू पनि हुनुहुन्थ्यो। साधनामा सात सय जनाले प्रत्यक्ष सहभागिता जनाउनुभएको थियो भने साधना हेर्न भनेरै पनि कार्यक्रमस्थलमा सयौं भक्त, शुभेच्छुक र जिज्ञासुहरूको उपस्थिति रहेको थियो।

परमपूज्य सद्गुरुदेवहरूको स्तुति-वन्दनाबाट बिहान ११:०० मा शुभारम्भ भएको शिविरमा गुरु पूजन सम्पन्न भएको थियो। पूजन गर्नेमा महेश डंगोल, मोहनदेवी डंगोल र विन्दु देवकोटा हुनुहुन्थ्यो। शिविरमा भजन-कीर्तन, नृत्यहरू पनि प्रस्तुत भएका थिए। कार्यक्रममा भक्तपुर, ललितपुर, गौरीगञ्ज (चितवन), पोखरा (कास्की) सम्पर्क कार्यालयहरूबाट भजन-कीर्तन प्रस्तुत भएको थियो भने गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रम, ललितपुर सम्पर्क कार्यालयबाट नृत्य प्रस्तुत भएको थियो।

करोडौं जपबाट नपाइने कुरा साधारण जपबाट प्राप्त हुने यस साधनामा शिव, दुर्गा र बगलामुखी गरी तीनवटा दिव्य प्रयोगहरू पनि सम्पन्न भएका थिए। प्रयोगहरूमा भाग लिन साधनामा अनिवार्य नाम दर्ता हुनुपर्ने प्रावधान रहेको थियो भने प्रयोगमा सहभागी हुन नाम लेखाउने साधक साधिकाहरूलाई गोलाप्रथाको आधारमा २१–२१ जना छनौट गरिएको थियो।

कार्यक्रममा आफ्नो मन्तव्य व्यक्त गर्ने क्रममा सावर पन्थी सदस्य १ लालबहादुर ढकालज्यूले हृदयमा राग, द्वेष, घृणा, अहंकारजस्ता विकारलाई हटाएर साधना गर्दा अवश्य सफल हुने बताउनुभयो। उक्त अवसरमा सावर पन्थी सदस्य २ रामजी अर्यालज्यूले साधनाबाट मानिसमा आउने परिवर्तन नै मुख्य कुरा भएको बताउनुभयो।

# जाँदा जाँदै

चौरासी लाख जीवनमा सर्वश्रेष्ठ मानव जीवन आध्यात्मिक उच्चता प्राप्तिको लागि हो। यसको लागि बुद्धि, चेतना, उत्कृष्ट ढाँचाको देह सबै नै परमात्माले मानिसलाई दिएका छन्। तर दुःखदायी कुरा यो छ कि यस महान् उद्देश्यको लागि जन्म लिएको मानिसले धर्तीमा आएपछि यस कुरालाई नै बिर्सन्छ र आफ्नो जीवनलाई भौतिक आवश्यकताहरुको परिपूर्तिमा नै व्यतीत गर्दछ।

मानिसको जीवनमा भौतिक आवश्यकताहरुको कुनै अन्त छैन। आफ्नो लागि, आफ्ना प्रियजनको लागि सुख, सुविधा र सन्तुष्टिका उपायहरु जुटाउँदा जुटाउँदै मानिसको जीवन बित्दछ। धेरैजसो मानिसहरुलाई जीवनको अन्ततिर मात्र यो चेतनाको उदय हुन्छ कि उसको जीवन यसै भागदौडमा बित्यो र अन्तमा खाली हात जानुपर्ने भयो। त्यतिखेर मानिस हताश भएर उपायहरुको खोजी गर्दछ, तर धेरै ढिला भएसकेको हुन्छ। कतिले त मृत्युपश्चात् मात्र यस सत्यलाई बुझ्दछन्।

ती मानिसहरु वास्तवमा धन्य छन् जसले जीवनमा समयमा नै यस चेतनालाई प्राप्त गर्दछन्। यस्ता सौभाग्यशाली मानिसहरुलाई कुनै व्यक्ति, कुनै घटना वा कुनै वातावरण यस दिव्य चेतना दिनलाई सहयोगी बन्दछन् कि मानिसको सुन्दर जीवन केवल खान, लाउनको लागि, ऐश आरामको लागि होइन आध्यात्मिक उच्चता प्राप्तिको लागि हो, परमात्मामा लीन हुनको लागि हो।

वर्तमान समय, वर्तमान परिवेश, वर्तमान मानिसहरु धेरै सौभाग्यशाली छन् कि आजको समाजलाई यस दिव्य चेतना दिनको लागि सिद्धाश्रम शक्ति केन्द्र दिव्य स्तम्भ बनेर उभिएको छ। अध्यात्मसँग जोडिँदै जीवनलाई ऊर्ध्वगामी बनाउन आज न त हिमालयका कन्दराहरुमा जान आवश्यक छ, न त जंगलमा भट्किन आवश्यक छ, न त आफ्नो घर गृहस्थीलाई त्याग्न आवश्यक छ। त्यस्तै आफ्नो शरीरलाई सास्ती दिँदै गरिने कुनै पनि कठोर उपायहरुको आवश्यकता पनि छैन। आज हरकोहीले आफ्नो घर गृहस्थीमा बसेर, आफ्नो जीवनयापनका सम्पूर्ण क्रियाकलापहरु गर्दै दिनमा केही समय मात्र दिएर पनि आफ्नो जीवनलाई अध्यात्ममय बनाउन सक्दछ, आफ्नो जीवनलाई वास्तविक सुख, शान्ति र आनन्दले आपूरित गर्न सक्दछ। यसको लागि मात्र एउटा कुराको आवश्यकता छ र त्यो हो सिद्धाश्रम शक्ति केन्द्रसँगको आबद्धता।

यस्तो स्वर्णिम अवसर हाम्रो अगाडि हुँदाहुँदै पनि किन ढिला गर्ने? किन अलमलिने? जाऔं सिद्धाश्रम शक्ति केन्द्र र बनाऔं आफ्नो जीवनलाई धन्य धन्य। आफ्नो वरिपरिका व्यक्तिहरुलाई पनि यही सन्देश दिऔं।

सिद्धाश्रम शक्ति केन्द्रको ढोका सबैको लागि खुल्ला छ। अस्तु।